कृति : स्वयम्भू
(सङ्क्षिप्त परिचय)

कृतिकार : भुवनलाल प्रधान

प्रकाशन संस्था : तीर्थनारायण-नारायणदेवी लुमन्ति ज:
किम्डोल, स्वयम्भू, काठमाडौं ।
फोन : ४२७०३८९ ४२७५१९८



संस्करण : प्रथम - ने.सं. १०९५
बु.सं. २५१९
वि.सं. २०३२
नवीनतम : दोस्रो - ने.सं. ११२९
बु.सं. २५५२
वि.सं. २०६५
: तेस्रो - ने.सं. ११३१
बु.सं. २५५४
वि.सं. २०६८

तस्वीरहरु : चन्द्रमान महर्जन

कम्प्यूटर टाइप : निलिमा महर्जन

कभर डिजाइन : भूबिन महर्जन

मूल्य : साठ्ठी रुपैयाँ (६०/-)
मुद्रण : सेवा प्रिन्टिङ्ग प्रेस
टेकु, काठमाडौं ।
ISBN : 978-9937-2-1017-1



# तीर्थनारायण-नारायणदेवी लुमन्ति जः



| **तीर्थनारायण मानन्धर** | **नारायणदेवी मानन्धर** |
|---|---|
| जन्मः  ने.सं. १०४४, बछलाथ्व त्रियोदशी | जन्मः  ने.सं. १०४६, गुलागा दुतिया |
| दिवंगतः ने.सं. ११२८, थिंलाथ्व नवमी | दिवंगतः ने.सं. ११२६, पोहेलागा आमै |

| **काय्पिं / भौपिं** | **म्ह्याय्पिं / जिलाजं** |
|---|---|
| रेणु | डा. लोचना / गिरिधरलाल |
| प्रचण्ड / रिता | डा. सुमित्रा |
| प्रकाश / नीरु | डा. अनिता |

व

**सकल छ्य्पिं**

# 'स्वयम्भू' पुस्तकबारे

विश्वमा नेपाललाई चिनाउने थोरै ऐतिहासिक तथा सांस्कृतिक सम्पदा मध्ये काठमाडौंको पश्चिममा पूर्वाभिमुख भई अवस्थित स्वयम्भू महाचैत्य पनि एक प्रमुख हो। यसलाई विश्व संस्था युनेस्कोले विश्व सम्पदा सूचीमा सूचिकृत गरेको छ। काठमाडौंबासीको आस्था केन्द्र, नित्य दर्शनस्थल रहँदै आएको स्वयम्भूमा काठमाडौं टेकेपछि नपुगेका थोरै मात्र होलान्। तथापि स्वयम्भूबारे ऐतिहासिक तथा सांस्कृतिक रुपमा सत्य-तथ्य जानकारी सहज रुपमा पाउन सक्ने व्यवस्था हुन नसक्नु दुःखको कुरो छ।

हाम्रा गुरुवर वरिष्ठ इतिहासकार तथा संस्कृतिविद् भुवनलाल प्रधानले आजभन्दा ३३ वर्ष अगाडि नै स्वयम्भूबारे संक्षिप्त रुपमा महत्वपूर्ण जानकारी दिने ढंगबाट पुस्तक प्रकाशन गराउनु भएको थियो। जो वर्तमानमा इतिहासको गर्भमा दूर्लभ भइसकेको छ। सोही पुस्तकलाई केही परिमार्जन सहित नयाँ ढंगवाट सम्बन्धित स्थानका तस्वीर समेत समावेश गरी पुनर्मुद्रण गर्नुपर्ने आवश्यकता महसूस हामीले गरेका हौं। जुन स्वयम्भूबारे जानकारी लिन चाहने सबैका लागि अत्यन्तै उपयोगी साबित हुनेछ भन्ने हामीलाई लागेको छ। यसलाई सर्वसुलभ तुल्याउने हाम्रो प्रयास रहनेछ।

स्वयम्भू महाचैत्यको सेवामा जीवन समर्पण गर्नु भएका माता नारायणदेवी मानन्धर र पिता तीर्थनारायण मानन्धरको देहावसानपछि हाम्रा हजुरबुवा अष्टनारायण मानन्धर समेतको स्वयम्भूप्रतिको समर्पण र सेवाभावलाई स्मरण गर्दै उहाँहरुको स्मृतिमा हामी सन्तति परिवारजनबाट स्वयम्भू महाचैत्यबारे गुरुवर विद्वान् भुवनलाल प्रधान (जो हाम्रा पिताका सहपाठी हुनुका साथै हाम्रो परिवारको हितैषी समेत हुनुहुन्छ)ले लेख्नु भएको कृति पुन: प्रकाशित गर्ने अनुमति प्राप्त गऱ्यौं। यसमा उहाँले परिमार्जनका साथै अत्यन्तै सारगर्भित भूमिका समेत थप समावेश गरिदिनुभयो। त्यसका लागि हामी उहाँप्रति हार्दिक आभार प्रकट गर्दछौं। यसअघि हाम्रा पिताले *जिगु लुमन्तिइ - यें दे म्हिगः व थौं* पुस्तकमार्फत् आफ्नो स्मरणमा रहेका स्वयम्भू सम्बन्धी सम्पूर्ण वृत्तान्त सार्वजनिक गरिसक्नुभएको विज्ञ पाठकहरुमा विदितै छ।

प्रस्तुत पुस्तक प्रकाशन गर्ने कार्यमा संयोजनकारी जिम्मेवारी वहन गर्नुभएका पत्रकार कुमार रञ्जितलाई पनि धन्यवाद नदिई रहन सकिन्न। साथै तस्वीरहरुका लागि फोटोग्राफरद्वय चन्द्रमान महर्जन र आशाकाजी महर्जन पनि धन्यवादका पात्र हुन्। यस पुस्तक प्रकाशनका क्रममा सहयोग पुऱ्याउने सबैमा धन्यवाद व्यक्त गर्दै प्रस्तुत पुस्तक स्वयम्भू महाचैत्यबारे रुची राख्ने जो कसैले अध्ययन गर्नुका साथै स्मरणमा राख्न सफल होस् भनी शुभकामना व्यक्त गर्दछौं।

**डा. लोचन मानन्धर** **प्रचण्ड मानन्धर**

**डा. सुमित्रा मानन्धर गुरुङ** **प्रकाश मानन्धर**

**डा. अनिता मानन्धर** **तथा**

**तीर्थनारायण-नारायणदेवी लुमन्ति जः परिवार**

# भूमिका

अधिकांश श्रद्धालु भक्तजनहरूमा स्वयम्भू स्थल र त्यहाँ अवस्थित चैत्य, मूर्ति, मन्दिर, पुर, गुफा आदिबारे जानकारीको कमी मात्र होइन नितान्त अभाव नै छ। उनीहरूमा स्वयम्भूबारे जति जानकारी छ त्यो सबै परम्परागत कथा, पुराण, आख्यान, किंवदन्ती आदिमा आधारित अलौकिक, अन्धविश्वासयुक्त कुरा मात्र हुन्, सत्य तथ्य, इतिहास होइनन्।

*लेखकको हस्तलिखित पाण्डुलिपिको अंश*

'स्वयम्भू' शब्दको चर्चा चल्ने बित्तिकै मानस पटलमा झल्याँस झल्कन्छ- काठमाडौं शहरमा बग्ने, तर आजकाल सुक्दै गइरहेको विष्णुमती नदीको केही पश्चिममा एउटा छुट्टै डाँडाको शिखरमा अवस्थित टाढैबाट देखिने दुईवटा ठूल्ठूला चम्किला आँखा र बीचमा एउटा प्रश्न चिन्ह जस्तो चित्र सहितको 'स्वयम्भू महाचैत्य' जसमा पुग्ने लामो भिरालो खुड्किलाको बाटामा झिसमिसे बिहानी उज्यालोलाई चिर्दै उक्लँदै-ओर्लँदै गरिरहेका भक्तालु जनसाधारणको ताँतीको चित्र। त्यस डाँडाको चुचुरामा केही भक्तजन "स्वयम्भू धर्मधातु वागीश्वर वाग्वार नाम कायगु सार थुलि" भनेर भट्याउँदै स्वयम्भू महाचैत्यका साथै अन्य स-साना चैत्य, मूर्ति, देवस्थलहरु घुमिरहेका, केही प्रत्येक मूर्ति, देवस्थलमा फूल-अक्षता छर्दै, केही धूप-बत्ती बालिरहेका वा हातले छुँदै ढोगिरहेका, दर्शन-प्रदक्षिणा, पूजा-आजा गरिरहेका, केही खुड्किलाको टुप्पैनिर रहेको पाटीमा विहानको स्वच्छ, सुरम्य वातावरणमा बुद्धको शान्ति सन्देशले ओतप्रोत ज्ञानमाला भजन-गायन भइरहेको सबै स्वयम्भूकै अङ्ग बन्छन्।

फेरि, पर्व-पर्वमा मात्रै भए पनि त्यस डाँडामा रहेका बुद्ध मूर्ति, देव-देवीहरुप्रति पूजा, श्रद्धा भक्ति चढाउन आउने भक्तहरुको सङ्ख्या पनि अगण्य रुपले बढिरहेकै हुन्छ। महायानी सम्प्रदायका पञ्जराँ, सम्यक् समारोह जस्ता ठूल्ठूला बौद्ध समारोहहरुसित पनि यो स्वयम्भू मूर्ति सम्बद्ध छ। त्यस्ता समारोहहरुमा स्वयम्भू देवताको मूर्तिले आदिबुद्धको हैसियतले अग्रिमता पाएकै छ।

गुन्हु पुन्हि (जनैपूर्णे) को पारु (परेवा) का दिन गाईजात्राको भोलिपल्ट द्वितीयाका दिन पाटनमा मतयाःमा सहभागी भएका सबै त्यसको भोलिपल्ट तृतीयाका दिन बिहान ३ ४ बजे नै झिसमिसे अध्याँरोमै पाटनदेखि बाजा बजाएर, धुप बत्ती बालेर, तुतः श्लोक पढेर स्वयम्भू महाचैत्यको दर्शन-पूजन गर्न आउँछन्। यसलाई बंलाये वनेगु भन्ने गरिन्छ। फेरि उपत्यकाका पञ्चाभिषेक गरी दिक्षित भइसकेका वज्राचार्य गुभाजुहरुले हरेक वर्ष चैत्र कृष्ण अष्टमीका दिन स्वयम्भू शान्तिपुरको अगाडि भित्तामा ठडिएको अक्षोभ्य भूस्पर्श मुद्राका बुद्धमूर्ति पूजा गरी "दे

आचाज् (वज्राचार्य) गुठी" मनाउने गरिन्छ। पहिला यस गुठी काठमाडौं, ललितपुर र भक्तपुरका दीक्षित गुभाजुहरु यहाँ एकै स्थान भेला भई मनाउने गरिन्थ्यो। पछि दीक्षित गुभाजुहरुको संख्या बढ्दै आएपछि आवश्यक व्यवस्था गर्न गाह्रो भएका कारण तीनै शहरका गुभाजुहरुले बेग्ला बेग्लै स्थानमा मनाउने गरियो। हिजोआज काठमाडौंका १८ वटा बहालका वज्राचार्यहरु मात्रै स्वयम्भू शिखरस्थित उपरोक्त अक्षोभ्य बुद्ध सामुन्ने भेला भई मनाउने परम्परा बसेको छ।

यस बाहेक अतीतमा काठमाडौं उपत्यकाभित्र महायान सम्प्रदायको प्रवेश पनि स्वयम्भू डाँडासित नै सम्बद्ध छ। उपत्यकाको सबैभन्दा पुरानो महायानी बौद्धस्थल स्वयम्भू डाँडो नै मानिएको छ। प्राचीनकालमा यो स्वयम्भू डाँडा र यसका फेदीका जङ्गल थरीथरीका दूर्लभ रुख, फूल, जडीबुटी, झारपात, बनैया पशुपंक्षी आदि प्राकृतिक सम्पदा र शोभाले झपक्कै थियो। त्यसमाथि यस डाँडालाई समय-समयमा मानव निर्मित धार्मिक-सांस्कृतिक कृतिहरुमा लुकेर रहेको उच्च कोटीको शीप-शैलीले पनि झल्मलाउँदो पारिएको थियो। तर यता केही शताब्दी अगाडिदेखि यस थलोप्रति देखाइएको उपेक्षा, स्याहार-सम्भार, संरक्षणको अभाव, मानव अतिक्रमण, लामो समयसम्मको प्राकृतिक क्रिया-प्रतिक्रिया, घामपानीको फलस्वरुप यसको शोभा मात्र बिलाएको होइन कृतिहरु पनि बिग्रिँदै छन्। पुरानो प्रतापपुर त केही वर्ष अगाडि जलेर ध्वस्त पनि भएको थियो। जसलाई तत्काल पुरानै शैलीमा पुनर्निर्माण गरियो।

धार्मिक महत्वको मात्रै कुरा गर्ने हो भने पनि आफैंले आफ्नो बखान गर्नु जस्तो हुन्छ। युरोप, अमेरिकादेखि आएका विदेशीहरुले पनि स्वयम्भूस्थलको वर्णन गर्न छुटाएका छैनन्। छिमेकी प्रदेश तिब्बती जनतामा पनि– "भैयुल छोर्तेन नाम स्वम्" *नेपालमा चैत्यहरु तीनवटा- अर्थात् स्वयम्भू चैत्य, बौद्ध (खास्ति) चैत्य र नमोबुद्धाय, नमडा चैत्य- (तीनवटा मुख्य, भव्य तीर्थस्थल हुन्)* भन्ने आहान आजसम्म प्रचलित र लोकप्रिय छँदैछ। लामो कुरा गर्नाको सट्टा के कुरा सम्झौं भने- विश्व सम्पदा संरक्षण संस्थाले पनि बिना आधार नेपालका सातवटास्थल संरक्षण गरिने सूचीमा यो स्वयम्भूस्थल समावेश गरेन होला। यस ज्वलन्त उदाहरणबाट नै स्वयम्भूस्थलको गरिमा प्रष्टिन्छ।

तर यस सम्बन्धमा दुःखको कुरो के हुन्छ भने महायान, वज्रयान जति जति प्रभावशाली हुँदै आए, उतिउति स्वयम्भू सम्बन्धी वस्तुगत स्थिति छोपिँदै आयो, ऐतिहासिकता हराउँदै गयो, नयाँ-नयाँ कल्पनाले ठाउँ पायो। अनेकौं कथा, किंवदन्ती, आख्यान, उपाख्यान रचिए। यसै क्रममा इ. १५०४ सालमा प्रकाशित पशुपति पुराणमा मृग बनेका महादेवको दर्शन गर्न बुद्ध श्लेष्मान्तक वनमा आएका थिए भनेर लेखियो। त्यस्तै इ. १५५८ सालको स्वयम्भू पुराणमा स्वयम्भू डाँडामा उम्रेको सहस्रदल कमलको हीराजस्तो ज्योतिको दर्शन गर्न बुद्ध स्वयम्भूमा आएको र केही दिन बसेको समेत वर्णन गरिएको छ। यस्तै बौद्ध धर्मका संस्थापक बुद्ध जन्मनु युग-युग अगाडि त्रेता युगमै महाचीनबाट आएका भनिएका मञ्जुश्रीले स्वयम्भू डाँडामा बसेर महायान सम्प्रदायको धर्म प्रचार गरिसकेको, मञ्जुश्रीलाई एकातिर भिक्षु भन्ने अर्को उनका

शक्तिरुपी दुई-दुईवटा स्वास्नी भएका, पञ्च बुद्ध, बोधिसत्व आदि क्रियाशील रहेको आख्यान, कथा किम्बदन्तीहरुले स्वयम्भू पुराण भरिभराउ छ। यस्तै-यस्तै कुराहरुले भक्तजनहरुको दिमाग भरिएको छ, तिनमा नै उनीहरुको विश्वास दरोसँग स्थापित भएको छ। अधिकांश श्रद्धालु भक्तजनहरुमा स्वयम्भूस्थल र त्यहाँ अवस्थित चैत्य, मूर्ति, मन्दिर, पुर, गुफा आदिबारे जानकारीको कमी मात्र होइन नितान्त अभाव नै छ। उनीहरुमा स्वयम्भूबारे जति जानकारी छ- त्यो सबै परम्परागत कथा, पुराण, आख्यान, किम्वदन्ती आदिमा आधारित अलौकिक, अन्धविश्वासयुक्त कुरा मात्र हुन्, सत्य तथ्य, इतिहास होइन।

संक्षेपमा भन्ने हो भने अधिकांश जनता स्वयम्भू सम्बन्धी ज्ञानबाट टाढा छन्, अन्धविश्वासले ग्रस्त छन्, अन्धकारमा रुमल्लिएका छन्। यस्तो शोचनीय स्थितिलाई दृष्टिगत गरी स्वयम्भूमा आउने भक्तजनहरुलाई स्वयम्भूस्थलमा रहेका धार्मिक, सांस्कृतिक, ऐतिहासिक कृतिहरुबारे अलिकति भए पनि ज्ञान होस् भन्ने अभिप्रायले यो सानो पुस्तक लेखिएको हो।

बौद्धधर्म भनेको सिद्धार्थ शाक्यमुनि गौतम बुद्धबाट इ.पू. ५२८-२७ सालतिरका बोधिज्ञान प्राप्त गरेपछि सर्वप्रथम प्रतिपादित भएको हो। उनी नै यस धर्मका संस्थापक हुन्। उनको जन्म इ.पू. ५६३ सालमा र निर्वाण इ.पू. ४८३ सालमा भएको थियो। उनी मानिस नै थिए, राजकुमार थिए- उनी कुनै ईश्वर, देवता, अवतार, अलौकिक प्राणी थिएनन्।

त्यस्तै मञ्जुश्री भनिने व्यक्ति पनि महाचीनबाट त्रेता युगमै नेपालमा आएका बोधिसत्व होइनन्, चिनिया पनि होइनन्, अलौकिक शक्ति सम्पन्न बोधिसत्व वा देवता थिएनन्। उनी थिए- इस्वी पूर्व प्रथम शताब्दीदेखि इस्वीको प्रथम शताब्दीमा जीवित रहेका उत्तर भारतका एक भिक्षु। साधारण भिक्षु।

बुद्ध-शासन पाँचसय वर्षसम्म सुचारु रुपले चल्यो। भिक्षु-भिक्षुणीहरुले पालन गर्नुपर्ने विनयका नियमहरुको त कुरै छाडौं, साधारण उपासक-उपासिकाहरुलाई दिइने बुद्धका उपदेशहरु भन्दा र सुन्दा रमाइला र सरल लागेपनि तिनको अभ्यास र उपासना अर्थात् व्यवहारमा लागू गर्दा निक्कै गाह्रो हुन्छ- अनित्य, दुःख, अनात्मन्, शील, समाधि, प्रज्ञा, चतुर आर्य-सत्य, अष्टाङ्गिक मार्ग आदि शब्दहरु सब यस्तै हुन्। अभ्यास गर्नु त कताकता, बुझ्नसम्म पनि कठिन भन्दा कठिन छन्। झन् दुःख-सुख, तृष्णा-क्लेश, आफू-पराइ आदिले रहित स्थिति- "निर्वाण" भन्ने स्थिति त साधारण मनस्थिति अन्तर्गत कल्पना गर्नुसम्म पनि सजिलो हुँदैन। तर जन-साधारण भने थोरै परिश्रम र खर्चले ऐहिक जीवन सुखी, सम्पन्न र भावी जीवन स्वर्गमा पनि सुबिस्तासँग बिताउने चाहना राख्दथे। अधिकांश जनताका यस्तै चाहनाको पूर्ति गर्न भनेजसो क्रममा महायान सम्प्रदाय अन्तर्गत देव-देवी, पूजाआजा, व्रत-होम, दान-पुण्य गर्ने प्रचलनले प्रश्रय पायो। यसबाट एकातिर बौद्ध धर्मको सार बिलाउँदै यसको उपासना सजिलो र खुकुलो भयो, अर्कोतिर प्रव्रजित धर्मगुरुहरुलाई भिक्षा-भोजन सजिलैसँग उपलब्ध हुने र पुरोहित वर्गलाई विशेष लाभ मात्र होइन मालामाल हुने अवसर पनि आयो। फलस्वरुप

यो सम्प्रदाय दिन दुगुना रात चौगुनाले फस्टाउँदै अतीव लोकप्रिय पनि बन्यो ।

त्यसै कारणले सम्राट कनिष्क (इ. १२०-१६२) को राज्यकालमा आयोजित चौथो सङ्गायन पहिला भएका तीनवटा सङ्गायन जस्तो पूरा स्थविरवादी हुन सकेन र सर्वास्तिवादी वैभाषिक सम्मेलन मात्र रहयो । त्यस सङ्गायनमा अल्पमतमा परेका महायानीहरुले त्यसलाई बहिष्कार पनि गरेका थिए ।

उपरोक्त कुरा निकालेको मनसाय के थियो भने प्रथम शताब्दीको अन्त्य र द्वितीय शताब्दी शुरु हुँदासम्म माथि उल्लेख गरिएका भिक्षु मञ्जुश्री महायान सम्प्रदायका प्रमुख गुरु जस्तै भइसकेका थिए । द्वितीय शताब्दीमा माध्यमिक दर्शनका प्रतिपादक भिक्षु नागार्जुन भिक्षु मञ्जुश्रीका शिष्यका पनि शिष्य थिए भनिएको छ । संक्षेपमा भन्ने हो भने भिक्षु मञ्जुश्रीबाट महायान सम्प्रदायको व्यापक प्रचार भयो । त्यही भिक्षु मञ्जुश्री नेपालबाट भारततिर झर्ने कमला नदीको किनारै किनार, खोंचैखोंच उक्लँदै नेपाल-चीनको सिमाना- हिमाली पर्वतीय शिखरमा पुगे । त्यसपछि मञ्जुश्री सजिलो र गहिरो खोला तर्नु नपर्ने बाटो पहिल्याउँदै कहिले नेपाली र कहिले चीनको तिब्बती इलाका हुँदै पश्चिमतिर काठमाडौंको पूर्व १ नम्बर तातोपानीमा आइपुगे । त्यहाँबाट ओर्लने क्रममा मञ्जुश्री बास बसेको भनेर देखाइने ठाउँ तातोपानीबाट साँखुतिर आउने बाटामा हाल भक्तपुर जिल्लाको सुडाल गाविसस्थित ल्हासापाको आजसम्म एउटा प्रसिद्ध बौद्ध तीर्थस्थलको रुपमा विद्यमान छ । यस्तो वस्तुस्थितिको र नेपाल-चीन सिमाना सम्बन्धी ज्ञान पटक्कै नभएका प्राचीन नेपाली बौद्धहरुले केवल कथा र किम्वदन्तीको लहलहैमा मञ्जुश्री भिक्षुलाई चीनबाट आएका धर्मगुरु भनेर दरो, गहिरो विश्वास गर्दै आएका मात्र हुन् ।

एक त मञ्जुश्री चिनिया नै होइनन्, उत्तर भारतबाट हिमालय पर्वत-तातोपानी-साँखु हुँदै काठमाडौं उपत्यकामा आएर महायान सम्प्रदाय प्रचार गर्ने पहिलो धर्मगुरु थिए । दोस्रो, चिनियाहरु, चिनिया बौद्ध संस्था वा चीन सरकारले मञ्जुश्रीलाई आजसम्म चिनिया नागरिक थिए भनेर दावी गरेका छैनन् । तेस्रो, त्यसबेला मञ्जुश्री चीन पुग्नु त परै रहोस् चीनमा महायान सम्प्रदाय वा मञ्जुश्रीको नाउँसम्म पनि पुगेको थिएन । चौथो, बौद्ध धर्म सर्वप्रथम चीन पुगेको साल इ. ६७ साल, बौद्ध धर्म प्रचार गर्न पुगेका दुईजना भिक्षु थिए- काश्यप मातङ्ग र धर्मरक्षक साथै चीन पुगेको बौद्ध सम्प्रदाय महायान नै थियो । चीनमा सर्वप्रथम मञ्जुश्रीको ठूलो मूर्तिको संस्थापन भएको इस्वीको पाँचौं शताब्दीमा मात्र हो ।

नेपालमा चिनियाहरुका नाम जस्ताको तस्तै प्रचार भएका छन्- फा-हिएन, हुयन त्साङ (साङ वा चाङ), स्रङ् चन-गम्पो (वा गम्वो), वाङ हिएन-चाङ, इसित्ङ आदि । मञ्जुश्री चिनिया नै भए उनको चिनिया नाउँ नै नेपालमा किन प्रचार भएन ? किन उनलाई संस्कृत नाउँले 'मञ्जुश्री' भनेर मात्र पुकार गरियो ? फेरि मञ्जुश्री फर्केर जाँदा यहाँ छाडेर गएका उनका शिष्यको नाउँ 'धर्माकर' भनिएको छ । उनको नाउँ पनि किन चिनिया नै भएन ?.....इत्यादि ।

यस्तो स्थितिमा विशेष गरेर नेवार बौद्धहरुले मञ्जुश्रीलाई चिनिया भिक्षु भनेर गलत

प्रचार गरी आएका छन– यो धारणा यिनीहरूको यस्तो मूर्खतापूर्ण र लाजलाग्दो उदाहरण हो।

अब महायानी देवदेवी, पञ्चबुद्ध, तिनका शक्ति, बोधिसत्व आदिको सिर्जनाबारे पनि केही चर्चा गरिहालौं। महायानी दर्शनको विकासको क्रममा समय-समयमा पञ्च अर्थात् ध्यानी बुद्ध, बोधिसत्व आदिको पनि सिर्जना गरियो। बुद्धको निर्वाणको केही शताब्दीसम्म त बुद्धको मूर्ति बनाउने चलनै भएन। बुद्धलाई जनाउन केवल बोधिवृक्ष, पादुका, धर्मचक्र, छत्र, रित्तो आशन आदिको प्रयोग हुन्थ्यो। पछि इस्वी पूर्वको अन्तिम शताब्दीतिर उत्तर-पश्चिमी भारतमा ग्रीक प्रभाव बढ्दै आउँदा राजा मेनान्दर (मिलिन्द प्रश्नका राजा मिलिन्द, इ.पू. १५५-४० तिरका)को राज्यकाल इ.पू. ९० सालमा सर्वप्रथम बुद्ध मूर्तिको गान्धार शैलीमा निर्माण भयो। यसका साथसाथै भनेजस्तो मैत्रेय बुद्ध, आर्यावलोकेश्वर बोधिसत्वका मूर्ति पनि देखा परे। इ.१४८-१७० सम्ममा चिनिया भाषामा अनूदित 'सुखावती व्यूह' शीर्षक ग्रन्थमा आर्यावलोकितेश्वर र उनका आध्यात्मिक पिता अमिताभ बुद्धको चर्चा भइसकेको थियो। इ.३८४-४१७ सम्ममा अक्षोभ्य बुद्ध र मञ्जुश्री बोधिसत्वका नाम देखा परिसकेका थिए। ह्युएन त्साङ (इ. ६२९-६४५)ले पद्मपाणि बोधिसत्व र वज्रपाणि बोधिसत्वको उल्लेख तथा ईत्सिङ इ. ६९७) ले केही अरु बोधिसत्वका नाउँहरुको चर्चा गरिसकेका थिए। इन्द्रभूतिले इ. ७०० सालमा पञ्च ध्यानी बुद्धहरु पाँच स्कन्धका अधिपतिका रुपमा स्थापित गरे। त्यसपछि ज्ञानसिद्धि (इस्वी-दशौं शताब्दीका) ले पञ्च बुद्धहरुलाई रुप, स्त्री-शक्ति थपिदिए जसबाट मानस पुत्रका रुपमा पाँच बोधिसत्व सिर्जित भए। यस्तै बढ्दै आइरहेका बौद्ध देवताहरुको संख्यामा दशौं शताब्दीमा सर्वोपरी स्थानमा आदि बुद्धलाई आसीन गराएको सिद्धान्त स्थापित गरेपछि बौद्ध देवदेवीहरुको सिर्जना वा कल्पना गर्ने क्रम टुङ्गियो।

अन्त्यमा 'स्वयम्भू' शब्दकैबारे केही लेखुं। यस शब्दको अर्थ सामान्यत: 'आफै जन्मने' हुन्छ। यसरी बौद्धदर्शन अनुसार विश्व ब्रह्माण्ड लगायत यसमा रहेका पृथ्वी सूर्य, चन्द्र, ग्रह, नक्षत्र, आकाश सबथोक कुनै चेतनायुक्त प्राणी, ईश्वरबाट सिर्जित भएको नभई ब्रह्माण्डमै विद्यमान कुनै जड ऊर्जा पुञ्जबाट नै विकसित भएका हुन्। सर्वप्रथम ब्रह्माण्डमा पहिचान गर्न नसकिने अस्फुट ऊर्जा-पुञ्ज नीहारिका हुन्छन्। यी जड तर शक्तिपुञ्ज वा ऊर्जा नै बौद्ध धर्ममा 'अविद्या' भनिएको देखिन्छ। त्यस अवस्थामा यो अज्ञेय, अस्फुट, निराकार जड शक्ति (वा ऊर्जा पुञ्ज नै रहे पनि परिवर्तनशील र गतिशील हुन्छ। यही परिवर्तनशीलताको क्रिया-प्रति-क्रियाद्वारा यसले केही उत्पादनशीलता पनि स्वत: प्राप्त गर्दछ। त्यसरी विकास हुँदाहुँदै जड निहारिका पुञ्ज केही संयोजनशील पनि बन्दछ। त्यस अवस्थामा त्यो 'संस्कार' को रुपमा रहन्छ। त्यस पुञ्जको उत्पादनशीलता र संयोजनशीलताद्वारा विकसित हुँदै 'विज्ञान' (चेतनाको अर्थमा, साइन्स्को अर्थमा होइन)- मा बदलिन्छ। त्यस अवस्थासम्म त्यो अस्फुट र निराकार नै रहन्छ र 'प्राण' (वा जीव) को प्रारम्भिक तत्व विकास भइसकेको हुन्छ। अनि त्यसैबाट यथासमयमा देखिने 'नाम-रुप' विकसित हुन्छ- रुप र चेतनायुक्त प्राणी (जीव)।

त्यसै प्राण वा प्राणीबाट करौडौं वर्षभित्र भएको क्रमिक विकास हो- आधुनिक मानिस, प्राण, चेतना, बुद्धि आदिले युक्त मानिस जसको सुबुद्धि र कुबुद्धि, सुमति र कुमति उग्ररुपले झनझन् तीव्र हुँदैछन् । त्यसैले बुद्धले उसको (आधुनिक मानिसको) कुबुद्धिलाई पन्छ्याउँदै सुबुद्धिलाई सत्मार्गमा लगाउँदै यस पृथ्वीमा प्राणीहरुको लागि 'बहुजन हिताय बहुजन सुखाय' काममा प्रयोग गर्न उपदेश दिएका छन्- बौद्धधर्मको, बौद्ध दर्शनको सार यही हो ।

यसरी बौद्ध विचारअनुसार ब्रम्हाण्ड र यसमा भए भरका वस्तुको उत्पादन कुनै प्राणयुक्त, चेतनायुक्त ईश्वर, देवताबाट भएको नभई जड, अचेतन ऊर्जाबाट स्वतः विकसित भएको हो । यस वैज्ञानिक 'स्वयम्भू' तथ्यलाई महायान दर्शनले बङ्ग्याएर स्वयम्भू भनेको 'आदि बुद्ध, धर्मधातु, वागीश्वर, ज्योतिरुप, बज्रधर, बज्रसत्व, नामसङ्गीति, महामञ्जुश्री' बनाएको मात्र हो ।

तर उपरोक्त जड ऊर्जापुञ्जबाट भएको क्रमिक विकासबारे जुन ज्ञान सिद्धार्थले प्राप्त गरे त्यसबारे विचारणीय कुरो एउटा यहाँ के छ भने पच्चीस सय वर्ष भन्दा अगाडिको जमानामै उनले अघिल्लो साँझमा सुजाताले अपर्ण गरेको एक पिण्डपात्रभरिको खीर भोजन गरेर, घाँसी एकजनाले दिएको घाँसका मुठा पीपलको रुख मुनि ओछ्याएर, पद्मासन कसेर- बिना प्रयोगशाला, बिना यन्त्र, बिना ज्याभल र साधन जुन ज्ञान एकै रातमा प्राप्त गरे त्यही ज्ञान- अर्थात् 'ऊर्जा' (एनर्जि) र 'पदार्थ' (मायटर) अन्तिम विश्लेषणमा छुट्टाउनै नसक्ने चरणमा पुग्छन् भनेर भेट्टाउन वैज्ञानिकहरु बीसौं शताब्दीमा मात्र सफल भएका छन् ।

यो भूमिका लेखन टुङ्ग्याउनु अगाडि के कुरो पनि भन्नु आवश्यक हुन्छ भने प्रस्तुत पुस्तकको प्रथम संस्करण ने.सं. १०९५ (इ. १०७५-७६) सालमा स्वयम्भू विकास मण्डलद्वारा प्रकाशित गरिएको थियो । त्यो संस्करण अहिले नपाइने भइसकेको छ । यो दोस्रो संस्करण तीर्थनारायण-नारायणदेवी लुमन्ति ज:ले प्रकाशित गरेको हो । प्रस्तुत संस्करणमा कमलाछि, काठमाडौंका अष्टनारायण मानन्धरले सर्वप्रथम स्वयम्भू चुचुरामा पानी पुऱ्याएको प्रसङ्ग र आनन्दकुटी विद्यापीठको प्रकरण आदि पनि थपिएका छन् ।

यसरी प्रस्तुत पुस्तकको प्रकाशनको अभिभारा वहन गरेकोमा तीर्थनारायण-नारायणदेवी लुमन्ति जः सम्वन्धित सबै सदस्यहरुप्रति म आफ्नो तर्फबाट घनिष्ठ मित्रवर डा.सुमित्रा मानन्धर मार्फत् हार्दिक आभार व्यक्त गर्दछु ।

**- भुवनलाल प्रधान**

ववरमहल, काठमाडौं
ने.सं. ११२९ कछलाथ्व नवमी
२००८ नभेम्बर ८

# विषय सूची



# स्वयम्भूको उत्पत्ति

स्वयम्भूको उल्लेख स्वयम्भू पुराण, नेपाल महात्म्य हिमवत् खण्ड, वंशावली आदिमा प्रशस्त पाइन्छन् । तिनीहरूमा बयान गरिएका हुन सक्ने र हुन नसक्ने कुराहरूमा शिला खोज्ने कोशिस गरेमा ऐतिहासिकता पनि केही न केही भेट्टाउन नसकिने होइन । स्वयम्भू नामैले पनि यसको अति प्राचीनता जनाउँछ । शिखी बुद्धले तपस्या गरेको ठाउँ ध्यानच्चो तथा नागबास ह्रदको पानी बाहिर पठाउने क्रममा मञ्जुश्रीले आफ्नी स्त्री केशनीलाई बसालेको फूलोच्चो चुचुराहरू स्वयम्भू चुचुरोभन्दा धेरै अग्लो भए पनि व्यवहारिक तवरले विचार गर्दा स्वयम्भू डाँडाको भौगोलिक स्थिति नै मानिसहरूको बसोबासका लागि बढी उपयुक्त थियो होला भनी अहिले पनि विचार गर्न सकिन्छ । नागवास ह्रदको पानी बाहिर पठाउन मञ्जुश्रीले कोदुवाल पुगेर कोटपाल पर्वत काटेका थिए । चोभारको डाँडो काटेर 'ह्रसिकाप' अर्थात् खाँद बनाइयो । त्यसपछि मञ्जुश्रीले गुह्येश्वरीको मृगदावन छेदन गरे । गुह्येश्वरीपछि गोकर्ण डाँडामा पनि छेडो काटेर खाँद बनाइयो । यी तीन-चार ठाउँबाट पानी बाहिर पठाएपछि उनले स्वयम्भूदेखि गुह्येश्वरीसम्म

पुगेको मञ्जुपतन नगर बसाले भनिएकोबाट पनि उनले बस्ती सुहाउँदो ठाउँ खोजेको कुराको पुष्टि हुन्छ । जे होस्, विभिन्न उपलब्ध सामग्रीहरूको आधारमा स्वयम्भूको उत्पत्तिबारे विचार गरौं ।

आदिकालदेखि नागवास ह्रद वा नाग ह्रद नाउँ भइरहेको यस उपत्यकामा बन्धुमतीबाट सत्य युगमा आएका विपश्वी बुद्धले जातमात्रोच्चो (लोक बोलीमा 'जामाचो' कहिने) मा तपस्या गरे । आदि बुद्धको आविर्भाव गर्न त्यस दहमा उनले कमलको कन्द अर्थात् गानु एउटा रोपे । त्यस बेला विपश्वी बुद्धले के भविष्यवाणी गरेका थिए भने त्यस बीउबाट उम्रने कमलमा स्वयम्भू ज्योति निस्कनेछ । त्यसपछि नागवास ह्रद आवाद हुनेछ । तदनुसार त्यस बीजबाट उम्रेको कमलको बोटमा फुलेको फूलमा स्वयम्भू ज्योति प्रकट भयो । कमलको गानु रोपेको दिन चैत्र शुक्ल पूर्णिमा र कमल बोटमा फूल फुलेको दिन ६ महिना पछिको आश्विन शुक्ल पूर्णिमा हो । स्वयम्भू ज्योति प्रादुर्भाव भएको दिन हुनाले यस आश्विन शुक्ल पूर्णिमाको दिनलाई स्वयम्भूको जयन्तीको रूपमा पूजाआजा गरी मनाउने चलन आजसम्म चलिआएकै छ । स्वयम्भू ज्योति प्रकट भएको थाहा पाएर अरूणपुरबाट आएका शिखी बुद्धले स्वयम्भू ज्योतिको दर्शन गरे । स्वयम्भू ज्योति प्रकट भएको छ महिनापछि अर्थात् मेष संक्रान्तिका दिन उनी त्यही ज्योतिमा लीन भए । आफू लीन हुनुभन्दा अगाडि उनले आफ्ना शिष्यहरूलाई यसो भनेका थिए, '....यस स्वयम्भू स्थल पछि मनोहर स्थल बन्नेछ । चारैतिरबाट मानिसहरू बस्न आउनेछन् । भक्तजन र यात्रीहरूको यहाँ ओइरो लाग्नेछ ।' यसपछि त्रेता युगमा अनुपम नगरबाट आएर विश्वभू बुद्ध फूलोच्चो शिखरमा तपस्या बसे । उनले यस्तो भविष्यवाणी गरेका थिए 'यस दहमा प्रज्ञा स्वरूप गुह्येश्वरीको प्रादुर्भाव हुनेछ ...वोधिसत्व एकजना आएर यहाँको पानी निकाल्नेछन् ... अनि यो ठाउँ धेरै जातिहरूको वासस्थान र तीर्थ स्थल हुनेछ ....' तदनुसार पञ्चशीर्ष (कहींकहीं महाचीन भनिएको छ) पर्वतबाट मञ्जुश्री आए । उनले यस ठाउँको पानी बाहिर पठाएर आबाद गर्ने अठोट गरे ।

यस घटनाको वयान केशर पुस्तकालयको वंशावलीमा यसरी गरिएको छ- 'जलमय भएको ह्रदमा गुप्त भइरहेको त्यस स्वयम्भूलाई प्रकाश पार्न दक्षिणतिरको पर्वत काटे । निकासा खुलाइ जल घटाउन लाग्दा त्यहाँ रहेका सव नागहरू भाग्न लागे, त्यसमध्ये कर्कोटक नामक नागलाई यस क्षेत्रको धनद्रव्य आदिका तिमी स्वामी भयौ भनी उनलाई यहीं राखे । ज्योतिस्वरूप स्वयम्भूको पत्ता लगाउन खोजी गर्दा पद्मवीज परेको ठाउँबाट जल वरावर बढ्दै आएको देखी जल-बन्धन गरे । त्यस ठाउँमा गुह्येश्वरी देवीको स्थान देखेर दर्शन गरी त्यस पद्मनाललाई

त्यहाँबाट अलि पर लगी त्यस पर्वतलाई पद्मगिरि भन्ने नाम प्रसिद्ध गरे । त्यही पर्वतमा पद्ममाथि रहेका ज्योतिस्वरूप स्वयम्भू नाथको प्रकाश गराए । त्यसपछि त्यस पर्वतदेखि गुह्येश्वरीसम्म आफ्नो नाउँले मञ्जुपत्तन नाउँ गरेको शहर बसाए । आफ्ना शिष्यवर्गलाई बुद्ध दीक्षा र तन्त्र मार्गहरूको उपदेश गरी गृहस्थ धर्ममा रहन खोज्नेलाई सोही धर्ममा उपदेश गरी त्यस धर्मको इच्छा नगर्नेलाई विहार बनाई विहारमा राखी धर्माकरलाई यस ठाउँको राजा तुल्याई आफू महाचीन तर्फ फर्के ।

मञ्जुश्रीले कार्तिक शुक्ल पूर्णिमाका दिन स्वयम्भूको र मार्ग कृष्ण नवमीका दिन गुह्येश्वरीको दर्शन गरे । पछि सातसय चेलाहरूसमेत क्षेमावतीबाट आएका क्रकुच्छन्द बुद्धले आफ्नो वाकद्वारा वाङमती वा वाग्मती नदीको प्रादुर्भाव पनि गरे । द्वापर युगको अन्ततिर शोभावतीबाट कनकमुनि बुद्ध र काशीबाट काश्यप बुद्ध यहाँ आए । स्वयं शाक्यमुनि बुद्ध भगवान् पनि स्वयम्भू डाँडामा आएर पुच्छाग्र चैत्यमा धर्म देशना गर्नुभएको, चूडा नाम गरेकी एकजना महिलालाई प्रव्रजित गर्नुभएको तथा साथमा ल्याएका १३ सय ५० शिष्यहरूमध्ये धेरैजनालाई यहीं छाडेर जानुभएको आदि कुराहरू पनि स्वयम्भू पुराणमा वर्णित छन् । ठाउँठाउँबाट आएका यी बुद्धहरूले स्वयम्भूको दर्शन आदि गरे, द्वादश तीर्थ, अष्ट वैराग तीर्थ आदि तीर्थस्थलहरूको पनि प्रकाश गरे ।

मञ्जुपतन बसालेपछि रेखदेख गर्न मञ्जुश्रीले धर्माकरलाई नियुक्त गरेर



गएका थिए । पूजाआजा कर्मकाण्डको सङ्कल्प पढ्दा ' ...मञ्जुपतन महानगरे.....' भन्ने चलन आजसम्म पनि चलेकै छ । धर्माकरपछि धर्मपाल र सुधन्वा राजा भएका थिए । काश्यप बुद्ध फर्केपछि उनकै सम्मतिअनुसार गौडको राजा प्रचण्ड देव नेपालमा आए । उनी मञ्जुश्रीका यहाँ बसीरहेका शिष्य गुणाकर भिक्षुका चेला बने । गुणाकर भिक्षुसँग प्रव्रज्या लिएपछि प्रचण्डदेव शान्तिश्री कहलिए र स्वयम्भू डाँडामा नै रहन लागे । स्वयम्भू पुराणअनुसार यी नै शान्तिश्री भिक्षुले कलि युग आउन लागेकोले स्वयम्भू ज्योति त्यसै खुला राख्न उचित छैन भन्ने ठानेर द्वापर युगको अन्ततिर नै त्यस स्वयम्भू ज्योतिलाई छोपेर चैत्य बनाइदिए । पर्सि ब्राउनले आफ्नो किताब 'पिक्चरेस्क' नेपालमा स्वयम्भू चैत्यको निर्माण तीन हजार वर्षदेखि दुई हजार वर्ष अगाडि Gorades भन्ने नेपालका राजाले गरेका थिए भनेर लेखेका छन् । गौड देश Gorades, राजा प्रचण्ड देव,-यी नाउँहरूमा गडबड गरेर नै ब्राउनले यस्तो लेखेको हुनुपर्दछ । वंशावलीहरूमा भने शान्तिश्री भिक्षुको सुझाउ र अनुरोधमा लिच्छवि राजा वृषदेवले स्वयम्भू ज्योतिस्वरूप छोपेर ठूलो चैत्य बनाइदिए भनिएको छ ।

यहाँनिर केही कुरा स्पष्ट गर्नु आवश्यक देखिन्छ । स्वयम्भू पुराणअनुसार त्रेता युगमा आएका मञ्जुश्रीका शिष्य गुणाकर भिक्षुले द्वापर युगको पनि अन्ततिर आएका प्रचण्डदेवलाई प्रव्रज्या दिएका थिए तथा प्रव्रज्यापछि शान्तिश्री भिक्षु कहिने यी प्रचण्डदेवले द्वापर युगमा नै स्वयम्भू ज्योति छोपेर चैत्य बनाएका थिए । शान्तिश्री 'वज्राचार्य' भएपछि 'शान्तिकराचार्य' कहिए र 'वज्राचार्य' भएपछि मात्र स्वयम्भू ज्योति छोपेका थिए ।

स्वयम्भू डाँडोको नाउँ पनि भिन्ना भिन्नै युगमा भिन्नाभिन्नै रहेको कुरा स्वयम्भू पुराणमा उल्लिखित छ । यसमा कमलको उत्पत्ति भएकोले यो डाँडो सत्ययुगमा 'पद्मगिरि' कहिन्थ्यो । त्रेतामा 'वज्रकूट गिरि' भनिन्थ्यो । यसको नाउँ द्वापरमा 'गोश्रृङ्गगिरि' तथा कलिको आरम्भमा 'गोपुच्छ गिरि' थियो । पछि मात्र 'स्वयम्भू' नाउँ रहन गएको हो । यसको नाउँ 'वज्रकूट गिरि' रहेको कारण यसको टाकुरामा उम्रेको सहस्र दल कमल हीरा[1] जस्तै ज्योतिर्मय भएकोले हो[2] । समयसमयमा यस डाँडाको आकार बदलिँदै गाईको सीङ र पुच्छर जस्तो देखिएको आजको स्थितिबाट पनि स्पष्ट हुन्छ । यसरी गाईको शरीरको आकार आउने कारणले नै यस डाँडालाई नेपाल भाषामा 'साम्हयां गुं' अर्थात् गाईको शरीर जस्तो आकार आउने वन भन्ने गरेको हो । यही 'साम्हयां गुं'लाई बिगार्दै 'स्यं गुं' भन्दै ल्याएको देखिन्छ ।

यहाँनिर विचारणीय कुरा के छ भने स्वयम्भू पुराण र लङ्काको महावंशमा

भगवान् बुद्ध एक पल्ट मात्र होइन तीन पल्ट लङ्का आउनुभएको तथा अगाडिका बुद्धहरूमध्ये ककुच्छन्द, कनकमुनि र काश्यप बुद्धहरू पनि आ-आफ्नो समयमा लङ्का आएका कुरा लेखिएको छ[3]। फेरि स्वयम्भू पुराण, नेपाल महात्म्य हिमवत् खण्डमा उपत्यकाको नाउँ सत्यवती, तपोवन, मुक्तिसोपान, नेपाल भनेर दिइए जस्तै महावंशमा लङ्का द्वीपको नाउँ भिन्नभिन्न समयमा ओज द्वीप, वर द्वीप, मण्ड द्वीप आदि भिन्नाभिन्नै दिइएका छन्। महावंशमा पनि यक्षहरूको कुरा आउँछ। अनि स्वयम्भू डाँडोलाई वज्रकूट भनेझैं महावंशमा पनि लङ्कालाई समन्त कूट, देवकूट, सुमनकूट, शुभ्र कूट आदि भनिएको छ। ई.पू. पाँचौ शताब्दीदेखी ईसवीको चौथो शताब्दीसम्म लेखिएको महावंश र यहाँका पुराणहरूमा पाइएको सादृश्य विचारणीय छ। जहाँसम्म भगवान् बुद्ध यहाँ उपत्यकामा आउनुभएको वा लङ्कामा जानुभएको भन्ने कुरा छ त्यो इतिहास सिद्ध भएको छैन।



---

१) **हीरा :- 'वज्र'-को अर्थ हीरा पनि हुन्छ- संस्कृत कोष।**

२) **...भएकोले हो :- यो भनाइ अमोघवज्र वज्राचार्यको हो।**

३) **लेखिएको छ :- महावंश परिच्छेद १५ हेर्नुस्।**



# महायानी चैत्यको स्वरूप

स्वयम्भू ज्योतिको उत्पत्ति एवं डाँडाका नाउँ फेरिदै रहेकोबारे हामीले विचार गरिसक्यौं । स्वयम्भू चैत्य मूलतया महायानी चैत्य भएकोले हामीहरू यसको निर्माणको प्रसङ्गतिर लाग्नुभन्दा अगाडि चैत्य, विशेष गरेर महायानी चैत्यको विषयमा केही छलफल गरौं ।

यहाँनिर 'चैत्य' शब्द उपरोक्त महायानी, वज्रयानी चैत्य बन्नुभन्दा अगाडि मात्र होइन बुद्धकाल (ई.पू. ५६३-४८३) भन्दा पनि धेरै समय अगाडि नै प्रचलनमा आइसकेको र महायानी सम्प्रदाय (ईस्वीको दोस्रौं शताब्दीदेखि आठौं शताब्दीताका र वज्रयानी सम्प्रदाय (ईस्वीको आठ-नवौं शताब्दीदेखि बाहौं-तेहौं शताब्दीताकाको विकास नहुँदै बुद्ध स्वयमले आफ्नो जीवन कालमा चैत्य 'चेतिय शब्द प्रयोग गरिसकेको केही तथ्य स्पष्ट गर्न आवश्यक हुन्छ । 'चैतिय' (चैत्यलाई

जनाउने पालि भाषाको शब्दको चर्चा त्रिपिटक धेरै ठाउँमा, उदाहरणार्थ 'महापरिनिर्वाण सूत्र' र अन्यत्र पनि भेटिन्छ, जस्तै:- बैशालीस्थित चापाल चैत्यको फेदमा आराम गर्दै बुद्धले आफू निर्वाण हुनुभन्दा एकदुई दिनअगाडि मात्र सँगै बसेका भिक्षु आनन्दलाई यसो भनेका थिए, "आनन्द ! बैशाली रमणीय छ, उदेन चेतिय, बहुपुत्त चेतिय, रमणीय छ, सारन्दद चेतिय रमणीय छ, चापाल चेतिय रमणीय छ ।"

फेरि, ई.पू. ४८३ साल बैशाख पूर्णिमाको मध्यरातमा कुशीनगरमा मल्ल गणतन्त्रको उपवर्तन आम्रवनमा 'यमक शाल' यथार्थ एकजोर शाल रूखको बीच फेदमा उत्तर दिशातिर सिरान गरी सिंहासनले लेटेर (अर्थात् उमेर एक भएको मात्र बाह्र घण्टा पछि) बुद्धले अनुपादिशेष निर्वाण प्राप्त गरे । सातौं दिनमा उहाँको लाशको मल्लहरूको मुकुटबन्धन चेतियानिर दाह संस्कार गरियो ।

यसरी चेतिय (चैत्य)हरू बुद्धकालभन्दा धेरै समय अगाडिदेखि पूजास्थलको रूपमा अस्तित्वमा थिए तथा तिनकै सेरोफेरोमा मशान पनि हुन्थे भन्ने तथ्य थाहा हुन्छ । तर यहाँ सम्झनुपर्ने एउटा कुरा के हुन्छ भने उपरोक्त प्राचीन चेतियहरू आजकाल हाम्रो उपत्यकामा जताततै वा बाहिर पनि पाइने प्रत्येक दिशामा एउटा-एउटा बुद्ध मूर्ति स्थापित भएको महायानी-वज्रयानी चैत्यहरू जस्ता थिएनन् । तिनमा कुनै मूर्ति वा चिन्ह र अरू सिंगारपटार हुँदैनथे । उपत्यकामा आजसम्म पनि ठडिएका लिच्छविकालीन ढुङ्गाका चैत्यहरूमा समेत पनि कुनै बुद्धमूर्ति नभईकन केवल तोरणसहितका रिता खोपा मात्र भएको तथ्य पनि यस सन्दर्भमा विचारणीय हुन्छ । अर्थात्, लिच्छवी काल दोस्रो शताब्दी देखी दशौं-एघारौ शताब्दीसम्म पनि बुद्धचैत्यमा बुद्धमूर्ति संस्थापन गर्ने चलन भइनसकेको ऐतिहासिक जानकारी मिल्दछ ।

जहाँसम्म स्तूप (थूर, थूवे, माटा, ढुङ्गा, ईंटको कृत्रिम थुम्को वा स्तम्भ) को प्रसङ्गबारे इतिहासबाट के देखिन्छ भने त्यस्ता स्तूप बनाउने परम्परा हज्जारौं वर्ष पहिले अति प्राचीन कालदेखि कायम भइआएको थियो । बुद्धलाई ई.पू. ५२८ तिर संबोधिज्ञान प्राप्त भएको लगतै भनेजसोपछि उहाँका दुई-वाचिक पहिला उपासक शिष्यहरू तपस्सु र भल्लुक दुई दाज्यूभाइले उरूबेला (बुद्ध गया)मा बुद्धचिन्हको रूपमा आफ्नो शिरबाट चुँडालेर दुईचारवटा दिएको रौंको समिन् आँठो आफ्नो देश उत्कल (उक्कलप, आधुनिक उडिसा)मा फर्केपछि गर्भमा राखेर एउटा स्तूप निर्माण गरेका थिए त्यही उडिसास्थित स्तूप नै बुद्धको शरीरको अङ्ग गर्भमा राखेर बनाइएको पहिलो बौद्ध शारीरिक स्तूप (वा चैत्य) मानिएको छ ।

फेरि 'महापरिनिर्वाणसूत्र'- अनुसार बुद्धको लाश मुकुटबन्धन चैत्यनिर दाह-संस्कार गरेपछि मशानमा डढेर बाँकी रहेका अस्थि-धातु (बुद्धको लाशका

हाडका टुक्राहरू) आठ थरी राज्य, जाति, समूहमा बाँडिएका थिए । ती आठै थरी प्रत्येकले आफूले पाएको अस्थि गर्भमा राखेर भिन्नाभिन्नै ठाउँमा एक-एकवटा स्तूप बनाएको थियो । त्यो अस्थिधातु भरेर बराबर गरी बाँडिदिने ब्राम्हण गुरू द्रोणले आफूले नापेको रूपमा प्रयोग गरेको गोल्फु गर्भमा राखेर पनि एउटा कुम्भ स्तूप बनाए । त्यस्तै अस्थि सबै बाँड्न सिधिएपछि मात्र आइपुगेका पिप्पलीवनका मोरिय (मौर्य)हरूले सोहरेर लगेको चिताका गोलहरू गर्भमा राखेर एउटा स्तूप बनाए । यी दशवटा स्तूप नै सर्वप्रथम बनेका अस्थिधातु स्तूप भए ।

बर्मा (म्यानमार)मा ई. २४८ सालमा बौद्ध धर्म प्रचार भएर यथा समयमा स्वेडगोन स्तूप निर्माण भएपछि बर्मेलीहरूले के दाबी गर्न लागे भने उक्कखप (उत्कल) भनिएको ठाउँ रङ्गुन हो र बुद्ध-केश राखिएको स्तूप पनि स्वेदगोन स्तुप नै हो तथा पहिलो शारीरिक बौद्ध स्तूप पनि यही हो ।

हुन न त ऐतिहासिक तवरले विवेचना गर्दा चैत्यभन्दा स्तूप वा थूर नै पहिले बनेको देखिन्छ । भगवान् शाक्यमुनि बुद्धको निर्वाणको लगत्तैपछि उहाँको अस्थि, चिताको गोलभस्म, अस्थि भाग लगाउन गरेको गोल्फु गर्भमा राखेर बनाइएको दशवटा स्तूप नै सबभन्दा पहिले बनेको बौद्ध स्मारक हुन्, चैत्यहरू त पछिपछि मात्र बनेका हुन् । तर महायानी बौद्ध दर्शन अनुसार बौद्ध धर्म अनादि कालदेखि चलिआएको एउटा अनन्त प्रक्रिया हो र पछि पनि चलि नै रहन्छ । महायानमा भगवान् शाक्यमुनि बुद्धबाहेक अरू अनेकौं बुद्धहरू, बोधिसत्वहरू मानिन्छन् । आदि बुद्ध, अगाडि भइसकेका २७ बुद्ध[१], ७ मानव बुद्ध[२], ५ ध्यानी बुद्ध[३] र असंख्य बोधिसत्व यी मध्येकै हुन् । ढोकाको तोरणमा लेखिने वा चैत्यमा राखिने मूर्तिहरू यी ध्यानी बुद्धहरूकै हुन् । महायानमा चैत्य भगवान् बुद्धको जीवनकालपछि होइन कि युगौंयुगौं अगाडिअगाडिदेखि बनिसकेको मानिन्छ । तर यस्ता धारणाहरू केवल आ-आफ्नै भावना वा विश्वास मात्र कुनै ऐतिहासिक तथ्य हुँदैनन् ।

## चैत्यको अर्थ

विशेष किसिमले बनेको बौद्ध स्मारकलाई चैत्य भनेकोमा प्रमुख तीन विचार पाइन्छन् । पहिलो विचारअनुसार चित्तलाई सधैं धर्ममा जागरूक राख्ने अर्थात् 'चैतन्य' दिने हुनाले यसलाई 'चैत्य' भनेको हो । दोस्रो विचारबमोजिम भगवान् बुद्धको 'चित्ताविशेष' अर्थात् उहाँको शरीरको हाड, खरानी आदि चित्तामा बाँकी रहेको वस्तु राखेर बनाइएकोले 'चैत्य' भनिएको हो । चित्तका उत्तम गुण जति सबै एकै ठाउँमा बटुलिए जस्तै संग्रह गरेर राखिने हुनाले यसलाई 'चैत्य'भनेको हो भन्ने तेस्रो विचार हो । यस विचारको साथै महायानले त चैत्यलाई संपूर्ण

ब्रह्माण्ड र बौद्ध दर्शनको सारको प्रतीक मानेको देखिन्छ । महायानी दर्शन नै चैत्यमा मूर्तिन भएको पाइन्छ । महायानमा चैत्यलाई ज्योतिस्वरूप, आदिबुद्ध, धर्मधातु, धर्मकाय, ज्ञानकाय, तत्वरूप, सर्वसुगतहृदय, सर्वकुशलसंग्रह, सर्वपारमितापूरक भनिएकोबाट पनि चैत्यको अर्थ झल्कन्छ ।

## चैत्यको किसिम

दीर्घ निकायअनुसार चैत्य चार किसिमका छन्- शारीरिक, परिभोग, धर्म र उद्देश्य :

(१) भगवान् बुद्धको शरीरको कुनै भाग, अक्सर गरेर अस्थि गर्भमा राखेर बनाइएको चैत्य 'शारीरिक चैत्य' भनिन्छ । अशोक चैत्य यस्तै हुन् ।

(२) भन्नलाई त भगवान् बुद्धले उपभोग गर्नु भएको चीवर, भिक्षापात्र, ओढ्यान इत्यादि वस्तु गर्भमा राखेर बनाएको चैत्यलाई 'परिभोग चैत्य' भन्दछन् । तर भगवान्ले भोगचलन गर्नुभएको कुनै पनि वस्तु जोगाइएको देखिन्न । तसर्थ बोधिवृक्षको पात-हाँगा मात्रै भए पनि गर्भमा राखेर बनाइएको स्तूप नै परिभोग चैत्य मानिएको छ ।

(३) भगवान् बुद्धको उपदेश, त्रिपिटक, सांगीतिका निर्णयहरू इत्यादि लामो समयसम्म टिक्ने वस्तुमा कुँदिएका चीजहरू राखेर बनाइएको चैत्य 'धर्म चैत्य' कहिन्छ । धर्म चैत्यहरू बर्मामा पाइन्छन् ।

(४) भगवान् बुद्धको जीवनी र दर्शनसम्बन्धी मूर्तिहरू गर्भमा राखेर श्रद्धालु भक्तजनहरूले आफ्नो कुनै न कुनै मनोकामना सिद्ध गर्ने उद्देश्यले बनाएको चैत्य 'उद्देश्य चैत्य' कहलिएको छ ।

चैत्यको उपरोक्त वर्गीकरणको खयालले महायानी चैत्य चाहिं अधिकाश मात्रामा उद्देश्य चैत्यसँग मिल्ने देखिन्छ । महायानमा चैत्यलाई 'सर्वसुगतहृदय, सर्वकुशलसंग्रह, सर्वपारमितापूरक इत्यादि भनिएकावाट यही आशय झल्कन्छ ।

## महायानी चैत्यको व्याख्या

चैत्य निर्माण[४]को लागि ठीक गरिएको जग्गा 'वास्तु' कहिन्छ । वास्तु छुट्टाइएपछि त्यस ठाउँमा नागको आङ छल्ने विधि गरिन्छ । अनि चैत्यको जग हालिन्छ र 'मण्डल' बनाइन्छ । मण्डलमा गोलार्ध उठाइन्छ । यो 'गर्भ' भनिन्छ । घण्टा वा कलशको आकारको मानिएको यो गर्भ ब्रह्माण्डको प्रतीक हो । घण्टाको मतलब आवश्यक बुद्धहरू र अरूहरू सबैलाई आराधना गरिएको र कलशको मतलब ज्ञान निस्कने साधन वा भाँडो मानिएको छ । ठाउँठाउँमा चक्र, पद्म, रत्नबज्र, विश्वबज्र आदि चिन्हहरू राखिन्छन् । चक्रावली, पद्मावली, ज्वालावली,

आदिका प्रतीक हुन्। उदाहरणार्थ चक्रको अर्थ अज्ञान ध्वस्त गर्ने ज्याभल; वज्रको अर्थ अविनाशी, अभेद्य, अछेद्य तत्व; रत्नको अर्थ दुर्लभ बोधिज्ञान, पद्मको अर्थ सांसारिक तृष्णा एवं अज्ञानले भिजाउन नसकिने कमल फूलको गति इत्यादि हुन्। वैरोचन बुद्ध[१] गर्भभित्र राख्ने भए गोलार्धको माथि स्तम्भमा चारैतिर 'दृष्टि' अर्थात् आँखा दुइटा लेखिन्छ- यो नै वैरोचन बुद्धको देखिने रूप हो। ती दुइटा आंखाको बीचबाट प्रश्न चिन्ह जस्तो एउटा चिन्ह तल ओरालिन्छ। आंखा र यो चिन्ह दृष्टिकै अङ्ग हो। यो दृष्टिलाई वैरोचन बुद्धको देखिने रूप मानिन्छ तापनि स्वयम्भू पुराणमा अर्कै कुरा लेखिएको छ। गर्भको माथि उठाइने चारपाते स्तम्भ ग्रहहरूको 'ग्रहभुवन' हो र यो 'दृष्टि' सूर्य र चन्द्रका प्रतीक हुन्। बुद्ध मूर्तिहरू चैत्यको गर्भको फेदमा चारै दिशातिर राखिन्छन्। 'दृष्टि' प्रदर्शित नगरिने भए वैरोचनको मूर्ति बनाएर गर्भभित्र राखिन्छ। अनि गर्भको फेदमा पूर्व दिशामा पूर्वाभिमुखी भू-स्पर्श मुद्राका अक्षोभ्य बुद्धको, दक्षिण दिशामा दक्षिणाभिमुखी वरद मुद्राका रत्नसम्भवको, पश्चिम दिशामा पश्चिमाभिमुखी ध्यान मुद्राका अमिताभको र उत्तर दिशामा उत्तराभिमुखी अभय मुद्राका अमोघसिद्धिको मूर्ति राखिन्छन्। यी ध्यानी बुद्धहरू[६]को साथमा उनीहरूका शक्ति स्वरूप पाँचजना ताराहरू- वज्रधात्वेश्वरी, लोचनी, मामकी, पाण्डुरा, तारा र उनीहरूका छोरा बोधिसत्वस्वरूप- समन्तभद्र, वज्रपाणि, रत्नपाणि, पद्मपाणि, विश्वपाणिहरूको मूर्तिहरू पनि स्थापित गरिन्छन्। यी मूर्तिहरूबाहेक गर्भ-मण्डलमा दिशादिशा र कुनाकुनामा यताउति ग्रह, नक्षत्र, नाग, यक्ष, पारमिता इत्यादिको प्रतीक अनेक मूर्ति र चित्रहरू राखिन्छन्। दृष्टिको माथि चारै दिशामा एउटा अर्धगोलाकार पातो पालीजस्तो गरेर राखिन्छ। यो पातो 'तोरण' कहिन्छ। जुनजुन बुद्धतिरको तोरण हो त्यसत्यस बुद्धको कुलको चिन्ह त्यसमा दर्शाएको हुन्छ। अक्षोभ्य कुलको चक्र, रत्नसम्भव कुलको रत्न, अमिताभ कुलको पद्म र अमोघसिद्धि कुलको विश्ववज्र। दृष्टि अर्थात् आँखाको माथितिर पञ्चरश्मि[७]को चिन्ह राखिन्छ। उपरोक्त चारै तोरणमा रहेको चक्रको माथि बाटुलो गरेर तेह्र तला उठाइन्छ। यी तलाहरू ज्ञान साधनको तेह्र तहका भुवन वा भूमि - प्रमुदिता, विमला, प्रभाकरी, अर्च्चिष्मती, सुदुर्जया, अभिमुखी, दूरङ्गमा, अचला, साधुमती, धर्ममेघा, समन्तप्रभा, निरूपमा, ज्ञानवतीका प्रतीक हुन्। यिनीहरूमध्ये पहिला पाँच तह 'श्रावक भूमि' पार गर्ने 'श्रावकयानी' कहिन्छ। नौ तह पार गर्ने व्यक्ति 'अर्हत्[८]' हुन्छ। एघार तह पार गर्नसक्ने 'महायानी' हुन्छ। तेह्रौं तह पार गर्न सकेको व्यक्ति मात्र 'वज्रयानी' हुन्छ। तसर्थ सबभन्दा पछिल्लो वा माथिल्लो तह ज्ञानवती भूमिलाई 'वज्रभूमि' पनि भन्दछन्। यी तेह्र तलामाथि बाटुलो आकार आउने गरी ठडाइएको पाँचवटा थाममाथि 'छत्र'

ओढाइन्छ । यस छत्रमा 'गजुर' पनि हुन्छ ।

चैत्य निर्माण कार्य सबै सम्पन्न भएपछि त्यसमा जीवन्यास पनि गरिन्छ । चैत्यका विभिन्न अङ्गको वर्णन र अभिप्राय संक्षेपमा यी नै हुन् ।

---

१) २७ बुद्ध :- दीपङ्कर, कौण्डिन्य, मङ्गल, सुमन, रैवत, शोभित, अनामदर्शिन, पद्म, नारद, पदुमोत्तर, सुमेध, सुजात, प्रियदर्शिनी, अर्थदर्शिनी, धर्मदर्शिनी, सिद्धार्थ, तिष्य, पुष्य, विपश्वी, शिखी, विश्वभू, क्रकुच्छन्द, कनकमुनि, काश्यप, (सिद्धार्थ लेखाइन अनुसार), तन्हमङ्कर, मेधङ्कर, सब्रानङ्कर ।

२) ७ मानव बुद्ध :- महायानमा विपश्वी, शिखी, विश्वभू, क्रकुच्छन्द, कनकमुनि, काश्यप र शाक्यमुनि ७ जनालाई मानव बुद्ध मानिन्छन् ।

३) ५ ध्यानी बुद्ध :- वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ, अमोघसिद्धि ।

४) चैत्य निर्माण :- चैत्य निर्माणको सविस्तार विवरणको लागि हेर्नुस् 'स्तूपलक्षणकारिका', कुलदत्त आचार्यको 'क्रिया संग्रह', हेमराज शाक्यजीको 'नेपाल सम्कृतिया मनुखा' इत्यादि ।

५) वैरोचन बुद्ध :- पाँच ध्यानी बुद्धहरूको बीचको । ढोकाको तोरण वा अरू ठाउँमा वैरोचनको मुद्रा बोध्यङ्ग हुन्छ र सेतो वर्णले माझमा लेखिन्छ । यसको सँगै दाहिनेतिर नीलो रङ्गको अक्षोभ्य, उनको पनि दाहिने पहेंलो रङ्गको रत्नसम्भव, वैरोचनको देब्रेतिर सँगै राता रङ्गको अमिताभ र उनको पनि देब्रेतिर हरियो रङ्गको अमोघसिद्धि हुन्छन् ।

६) ध्यानी बुद्ध :- (१) वैरोचन बुद्ध, बोध्यङ्गमुद्राका, शून्यवादका प्रतीक । (२) अक्षोभ्य बुद्ध, भू-स्पर्श मुद्राका, पृथ्वीमा भइरहेको अस्थिरता बोधिज्ञानद्वारा स्थिर गर्न सकिन्छ भन्ने धारणाको प्रतीक । ३) रत्नसम्भव बुद्ध, वरदमुद्राका, मानिसहरूलाई चाहिने जति बोधिज्ञानले दिन सक्छ भन्ने धारणाको प्रतीक । ४) अमिताभ बुद्ध, ध्यान मुद्राका, असीम करुणाको प्रतीक, ५) अमोघसिद्धि, अभय मुद्राका, संसारको दुःखदेखि डराउनु पर्दैन, बोधिज्ञानले उद्धार गर्न सक्छ भन्ने धारणाको प्रतीक ।

७) पञ्चरश्मि - यसको मतलब यसरी बताइएको छ ।

| बुद्ध | वर्ण | तत्व | गुण |
|---|---|---|---|
| वैरोचन | श्वेत | जल | शान्तिरूप |
| अक्षोय | नील | आकाश | ज्ञान रूप |
| रत्नसम्भव | पीत | पृथ्वी | वरदान रूप |
| अमिताभ | रक्त | अग्नि | करुणा |
| अमोघसिद्धि | हरित | वायु | सृष्टि |

८) अर्हत्- हीनयानी मतानुसार साधनका भूमि चार तह मात्र छन् - स्रोतापति, सकृदागामी, अनागामी र अर्हत् ।



# स्वयम्भू चैत्यको निर्माण

स्वयम्भू डाँडामा फक्रेको सहस्रदल कमलवाट निस्केको ज्योतिलाई छोपेर चैत्य बनाउने श्रेयका भागी स्वयम्भू पुराण अनुसार गुणाकर, शान्तिश्री भिक्षुहरू थिए। यी गुणाकार भिक्षु त्रेता युगमा आएका मञ्जुश्रीका शिष्य थिए। शान्तिश्री चाहीं काशीवाट द्वापर युगमा स्वयम्भू ज्योतिको दर्शन गर्न आएका काश्यप बुद्धको निर्देशनुसार गौड देशको आफ्नो राजपाट छोरा शक्तिदेवलाई सुम्पेर नेपाल आएका भूतपूर्व राजा प्रचण्डदेव थिए। यहाँ आएर उनले गुणाकरवाट प्रव्रज्या लिए। प्रचण्डदेव स्वयम्भू डाँडैमा बसे भनिएकोबाट स्वयम्भू चैत्य नबन्दै डाँडाको चुचुरामा मानिसहरूको बसोबास भएको बुझिन्छ। डाँडामा जंगल लगाउने त खुद मञ्जुश्री नै हो भनिएको छ।[1] अनि कलियुग लाग्ने वेला भएको बुझेर शान्तिश्री भिक्षुले स्वयम्भूको ज्योति खुला राख्न उचित सम्झेनन् र उनले त्यस ज्योति छोपिदिए। स्वयम्भू पुराणअनुसार त्यो ज्योति छोपेको एवं चैत्य बनाएको पनि द्वापर युगैमा थियो।

तर वंशावलीहरूमा भने स्वयम्भू चैत्यको निर्माणको सिलसिलामा गुणाकर, शान्तिश्री भिक्षुहरूको साथै वृषदेव राजाको नाउँ पनि देखा पर्छ। राजभोग माला वंशावलीमा यसवारे यसो लेखिएको छ- 'केही कालपछि यिन राजा (प्रचण्डदेव)लाई बौद्ध धर्म अति प्रिय हुन जाँदा पुत्रकन राज्याभिषेक दि देशदेश भ्रमण गरी त्यसै

स्थान एक सामर्थी गुणाकर नाम एक बौद्ध सामर्थी थियो र प्रचण्डदेव राजाले तिनै क्षपणकबाट चर्या लिया । त्यहाँपछि मान्नश्री भिक्षुक भनि नाम राखि स्वयंभुकन सेवा गरी यसै स्थानमा रहन्छु भनि रह्याका थिया । केही दिन पछि स्वयम्भू कुंडकन चैत्याकारले छोप्नु पर्‍यो भनि राजा गुणाकर भिक्षुसंग बिन्ती गरी सम्मत गरी राजा वृषकन हात लिया । राजाले पनि तिनै भिक्षुका मनमा प्रवृत्त भै उनीहरूका सम्मत प्रमाण स्वयम्भू कुंडकन चैत्याकार बनाइ छोपि दियो । फेरी वसुपुर वरूणपुर अग्निपुर, वायुपुर सम्मरपुर भनि पञ्चपुर बनाइ पाँचै देवता स्थापना गरी रह्याका थिया ।' अरू ग्रन्थहरूमा पनि यही आशयको कुरा लेखिएको पाइन्छ । तर वंशावलीको कुरा पनि प्रमाणसिद्ध इतिहास होइन ।

माथिको उद्धरणमा उल्लिखित राजा वृषदेव बाबुराम आचार्यअनुसार वि.सं. २८२ सालतिर लिच्छवी राज्य उपत्यकामा स्थापना गर्ने राजा जयदेवभन्दा १२ जना राजापछिका एवं वि.सं. ५२१ देखि ५६२ लगभगसम्म राज्य गर्ने प्रसिद्ध राजा मानदेवका बराज्यू भएको तथ्यबाट उनको समय विक्रम संवत्को पाँचौं शताब्दीतिर आउँछ । प्रचण्डदेव नेपाल आएर 'वज्राचार्य' हुने मनसुवाले गुणाकर भिक्षुबाट प्रव्रज्या लिए । यिनीहरू दुवैजना निक्कै प्रभावशाली भएका देखिन्छन् । माथि उतारिएको टुक्रामा ' राजाले पनि तिनै भिक्षुका मनमा प्रवृत्त भै' भनिएकोबाट राजा वृषदेवलाई महायानी बौद्ध धर्ममा आस्था बढाइदिने यिनीहरू नै थिए । राजा वृषदेव बौद्ध धर्मबाट यत्तिको प्रभावित भएका थिए कि उनले 'सुगतशासनपक्षपाती' भन्ने उपाधि समेत लिए ।

यस सन्दर्भमा अरू केही कुरा पनि विचारणीय हुन आउँछ । हुन त महायानी मतानुसार बौद्ध धर्म कल्पकल्प अघिदेखि चलिआएको छ । तर ऐतिहासिक तवरले विचार गर्दा महायानी मतको प्रादुर्भाव र प्रचार विक्रम संवत्को तेस्रो शताब्दीसम्ममा र बज्रयानको नवौंदेखि बाह्रौं शताब्दीसम्ममा भएको थियो । राजा वृषदेवको राज्यकाल माथि देखाइअनुसार वि.सं. पाँचौं शताब्दीतिर पर्दछ । गोपालवंशको अन्तिमा राजा यक्ष गुप्तकै पाला बौद्ध धर्मको उपत्यकामा प्रवेश भएको उल्लेख राजभोग माला वंशावलीमा छ । हुन त यो वंशावलीको कुरा प्रमाणसिद्ध होइन । बाबुराम आचार्यअनुसार लिच्छविहरू उपत्यकामा ईशवी संवत्को प्रथम शताब्दीमा आएका र यहाँका किराँत राजाहरूलाई हराएर जयदेवले वि.सं. २८२ तिर लिच्छवि राज्य स्थापना गरेका थिए । यी लिच्छविहरू बौद्ध वा बौद्धका हिमायती हुनाले यिनीहरूले नै उपत्यकाभित्र बौद्ध धर्मको प्रवेश गराएको सम्भावना निक्कै देखिन्छ । महायानी सम्प्रदायको उपत्यकामा प्रचार लिच्छवि कालैमा भएका भन्ने धनवज्रजीको भनाइ छ । जे होस्, वृषदेव वा उनीभन्दा

अगाडिका राजाहरूको पालामा प्रवेश भएको महायान, सम्प्रदाय गुणाकर, शान्तिश्री जस्ता आचार्यहरूले सम्भवत : वृषदेव जस्ता राजालाई प्रभाव पारेपछि अधिक मान्य र व्यापक भयो । शान्तिश्री महायानी तान्त्रिक गुरू थिए र स्वयम्भू चैत्य पनि महायानी नै हो । मञ्जुश्री र तारालाई महायानी दर्शनको प्रमुख अङ्ग- प्रज्ञाको मूर्त रूप एवं अवलोकितेश्वरलाई करूणाको मूर्त रूप भन्दछन् । यसरी महायानी मतको बोलबाला बढेको बेला स्वयम्भू चैत्यको पनि निर्माण भएको हुन सक्छ । तर महायानीहरू स्वयम्भू चैत्यको स्थापना १६०० वर्ष जति मात्र अगाडि भएका राजाको पालामा भएको होइन कि द्वापर युगैमा भएको मान्दछन् ।

यसरी स्वयम्भू चैत्यको निर्माण काल ठम्याउन नसके पनि यो महायानी दर्शनका सबै अङ्ग पुगेको धर्मधातु चैत्य हो । यसको गर्भको फेद वरिपरि ध्यानी बुद्ध र तारा मूर्तिहरू यस प्रकार राखिएका छन् । पूर्वतिरको लामो सिंढी चढेर माथि पुग्नेबित्तिकै सोझै देखिने पूर्वाभिमुखी वैरोचन बुद्ध, त्यसको सँगै बायाँतिर अर्थात् अलिकता उत्तरतिर पूर्वाभिमुखी अक्षोभ्य, वैरोचनको दायाँतिर अलिकता आग्नेय कोणमा मामकी, अनि गर्भलाई दाहिने पार्दै प्रदक्षिणा गरेर जाँदा क्रमशः दक्षिणाभिमुखी रत्नसम्भव, पद्मपाणितारा, पश्चिमाभिमुखी अभिताभ, आर्यतारा, उत्तराभिमुखी अमोघ सिद्धि, सप्तलोचनी ताराका मूर्तिहरु हुन् । यी बुद्ध मूर्तिहरुको प्रायः सामुन्नेसामुन्ने बाटुला मण्डप पनि भूइँमा बनाइएका छन् । यी बाहेक चैत्यमै र यताउति पनि अनेक विचारका प्रतीक धर्मधातु मण्डल, कैयन मूर्ति र अरू वस्तुहरू राखिएका छन् । गर्भमुनि स्वयम्भूको ज्योति अझ छँदैछ भन्ने लोकोक्ति पनि छ । यस चैत्यको आकार 'पात्राकृति' हो ।

स्वयम्भू चैत्यका बुद्ध मूर्तिहरू शुरूमा ढुंगाकै राखिएको अनुमान हुन्छ । वंशावलीहरूमा लिच्छवि राजा मानदेवले प्राचीन कालमा बनेका देवालयहरू भत्केका बिग्रेका जति सबैको जीर्णोद्धार गरेको तथा मञ्जुश्रीले पूर्व भागस्थित पर्वतमा ठूलो चैत्य बनाई स्वयम्भू भगवानलाई त्यहीं राम्रोसँग प्रतिष्ठा गरी पूजा समेत चलाएका थिए भन्ने उल्लेख भएकोले उनले स्वयम्भू चैत्यको पूरा मर्मत गरेको देखिन्छ । राजा मानदेवले स्वयम्भूमा असल छत्र पनि चढाएका थिए । उनको समय वि.सं. ५२१ देखि ५६२ सम्म लगभग पर्दछ । वि.सं. १४०६ मार्गमा सुल्तान शमशुद्दीनले उपत्यकामा गरेको आक्रमण र तोडफोडको सिलसिलामा स्वयम्भू चैत्य भत्काइयो, त्यसमा राखिएका मूर्तिहरू पोलिए, अरू, पनि कैयन वस्तु सखाप पारिए । यस घटनालाई बताउने शिलापत्र स्वयम्भूमै आजसम्म मौजूद छ । यसरी सखाप भएको स्वयम्भू चैत्यको निर्माण कान्तिपुरका एकजना महापात्र राजहर्ष भल्लोकले सं.१४२९ मा गरेका थिए । यसको दुईतीन वर्षपछि नै

चटयाङ-चुट्ङल बिग्रेको थियो । वि.सं. १६६९ सालमा भक्तपुरका राजा ज्योति मल्लले पनि स्वयम्भू चैत्यको जिर्णोद्धार गरेका थिए । यसपछि सं. १६५२ मा राजा शिवसिंहको पालामा पनि स्वयम्भूको जीर्णोद्धार भएको थियो । राजा नृपेन्द्र मल्लको राज्यकाल (वि.सं. १७३२-१७३७) मा पनि सालको रूख ल्याएर स्वयम्भू चैत्यको जीर्ण काठहरू फेरिएको थियो । फेरि यी राजाले अघिका पत्थरका मूर्तिहरूको सट्टा सुनका मूर्तिहरु स्थापित गरे तथा पुराना दुई मूर्तिहरू परिचमतिर राखिदिए । "सं.८३३ (वि.सं. १७७०) आषाढ शुदि । प्रतिपदा यस दिन श्री ३ स्वयम्भू देउता चारवटा ढालेर बनाएर यो दिन देवलोक सबै सवारी हुन लगाएर देश घुमाएर जात्रा गरेर स्वकंबु (खेनका नाउं, ठाउं विशेष)मा विराजमान गराइएको थियो यसको भोलिपल्ट स्वयम्भू देउता स्वयम्भू लगेर जात्रा गरेर देवलोक सबै हुन आउनु भयो यसको पनि भोलिपल्ट स्थापना गरियो । श्री ३ भास्कर मल्ल (ने.सं. ८२१-८४४) महाराजा श्री भुवन लक्ष्मी राजमाता यी दुई जनाले बनाएको स्वयम्भू देउता फेरिएको दिन थियो ।"[४] भनेर लेखिएकोबाट भास्कर मल्ल राजाले वि.स. १७७० मा स्वयम्भूका बुद्ध मूर्ति ४ वटा फेर्न लगाएका थाहा हुन्छ । यसबाट स्वयम्भू चैत्यमा त्यस बेला ४ वटा मात्र बुद्ध मूर्ति रहेको हुन सक्ने एवं आजकाल देखिने वैरोचन मूर्ति पछि मात्र थपिएको सम्भावनातिर सङ्केत मिल्छ । राजा जय प्रकाश मल्लले पनि सं. १८२१ मा चैत्यका काठहरु नयाँ फेरेका थिए । श्री ३ म. चन्द्र शमशेरको शासन काल (वि.सं. १९५८-८६)मा पनि ल्हासाको एकजना लामा शाक्यश्रीद्वारा चैत्यको माथिल्लो भागको र तल्लो भागको रमस्सुन्दर- धर्मसुन्दर तुलाधरद्वारा भएको थियो । सबभन्दा पछिल्लो मरम्मत र रङ्गरोगन श्री ५ महाराजाधिराज महेन्द्रको राज्यकालमा सं. २०१५-१७ सालतिर भएको थियो ।

---

१) भनिएको छ :- राजभोगमाला वंशावली, प्राचीन नेपाल पृ. ७

२) भएको थियो :- हेर्नुस् बलदेव उपाध्याय- बौद्धदर्शन, पृ. ४५

३) भन्दछन् :- हेर्नुस् भिक्षु डा. धर्मरत्न एम.ए., डि. फिलको 'बुद्ध मूर्तिको निर्माण कहिले र कसरी ?', आनन्द भूमि वर्ष २, ६-७

४) हेर्नुस् पूर्णिमा सं. १२, पृ. ३४

# पञ्चपुर

स्वयम्भू शिखरमा पञ्चपुर[१]को नाउँले कहिने वसुपुर, वायुपुर, अग्निपुर, सम्बरपुर र नागपुर गरी जम्मा पाँच पुर छन् । स्वयम्भू पुराण एवं वंशावलीहरूअनुसार यिनीहरूको निर्माण स्वयम्भू मूल चैत्यको साथसाथै भएको थियो । यिनीहरू साङ्केतिक र पञ्चतत्वका प्रतीक मानिन्छन् ।

## वसुपुर



पूर्वतिरको लामो सिँढी चढी गर्भलाई दाहिने पारी चैत्यको प्रदक्षिणा गर्दा ठीक दक्षिणतिर बाटोको देब्रेतिर केही मूर्तिहरू रहेको ठाउँ देखा पर्छ । यहाँ गणहरूसहित वसुन्धरा देवीको मूर्ति राखिएको छ । वसुन्धरा देवी पृथ्वीको प्रतीक देवी हो । यही 'वसुपुर' हो । वसुपुरले पृथ्वी तत्व जनाउँछ ।



## वायुपुर

टाकुराको नैऋत्य कोणमा वायु तत्वको प्रतीक गराएर ढिस्कोजस्तो ढुंगाको प्रतिमा एउटा मन्दिरभित्र राखिएको देखिन्छ । ढुंगामा कुनै आकार विशेष बनाइएको छैन । 'वायुपुर' यही हो । वायु अर्थात् आँधीवेरीको भय र बिघ्न हटाउन यो वायुपुरको प्रतिमाको पूजा गरिन्छ । ललितपुरको रातो मच्छेन्द्रनाथको रथ यात्राको बेला कुनै बिघ्न आइनपरोस् भन्ने हेतुले सालिन्दा यहाँ पूजा गरिन्छ ।

## अग्निपुर



वायुपुर घुमेर उत्तरतिर लाग्दै वायव्य कोणमा पुगेपछि हामी भुईंमा गाडिएको एउटा ठूलो ढुंगा सेतो गरेर पोतिएको हुन्छ। यसमा नाक, आँखाको चिन्ह पनि लेखिएको छ। यो अग्नि तत्वको प्रतीक 'अग्निपुर' हो।

## सम्वरपुर वा शान्तिपुर

अग्निपुरको प्रदक्षिणा गरेर उत्तरतिर ओह्रालो लागेपछि बीचमा हामी मन्दिर एउटा देख्छौं। बाहिरबाट मन्दिर जस्तो देखिए पनि यसको भित्र कुनै देउताको मूर्तिको सट्टा तालावन्द गरिएको ढोका देखिन्छ। यो सुरूङभित्र जाने ढोका हो। यो सुरूङ तीन तलासम्म तल गएको छ र तलैपिच्छे नौनौवटा कोठा गरी यसमा जम्मा २७ वटा कोठा छन्। यो आकाश तत्वको रूपमा बनाइएको पुर हो। यसैले यसको नाउँ 'सम्वरपुर' राखिएको हो। यो अरू पुरहरूभन्दा पछि बनाइएको थियो र शान्तिश्री वा शान्तिकराचार्य भिक्षु यहीं वस्ने गरेका र यहीं समाधिष्ठ भएकाले यसको नाउँ 'शान्तिपुर' पनि रहन गएको छ र यही नाउले यो



बढी प्रख्यात छ । स्वयम्भू पुराणको लेखाइ बमोजिम शान्तिश्री 'वज्राचार्य' भएपछि 'शान्तिकराचार्य' कहिए ।

स्वयम्भू पुराणअनुसार शान्तिकराचार्य स्वयम्भू चैत्य, पञ्चपुरको निर्माण आदि आफ्नो काम सिध्याइसकेपछि द्वापर युगैमा शान्तिपुरका भित्रै समाधिष्ठ भएका थिए । राजा गुणकाम देवको राज्य काल (वि.सं. १०४३ तिर) मा ठूलो सुखा र अनिकाल परेको थियो । अरू कुनै पनि उपाय सफल नभएकोले आखिर राजाले शान्तिकराचार्य गुरूकहाँ गएर अनुरोध गरे । गुरूले आफ्नो तान्त्रिक शक्तिले आठै नाग बोलाए । सात नागहरू त सपरिवार नै आइपुगे । नआएको कर्कोटक नागलाई राजा स्वयं गएर बाँधेर ल्याए । आठै नाग सपरिवार जम्मा भएपछि गुरू शान्तिश्रीले तान्त्रिक विधि सम्पन्न गरे । पानी पऱ्यो । सधैं जनताको हित-साधनामा तत्पर रहने गुरु शान्तिश्रीले भविष्यको लागि पनि सोचेर नागहरूलाई विदा गर्नुअगाडि उनीहरूसँग एउटा अनुरोध गरे । यो अनुरोध के थियो भने शान्तिश्री गुरू नागहरूको मुटुको रगत अलिअलि लिएर त्यस रगतले एउटा 'नाग-मण्डल' लेखिराख्न चाहन्थे र त्यसको लागि आठै नागले आ-आफ्नो मुटुको रगत अलिअलि दिनुपर्ने तथा त्यो 'नाग-मण्डल' घाममा देखाएपछि पानी पर्ने वाचा पनि गराउनुभयो । आफूहरू उम्कने अर्को उपय नदेखी नागहरूले रगत दिएर पछिलाई पनि उक्त नाग-मण्डल घाममा देखाउने बित्तिकै पानी पारिदिने वाचा गरे । शान्तिश्री गुरुले नागहरूको रगतमा रंग मिलाएर 'नाग-मण्डल' लेखेर भविष्यमा चाहिने वेलामा प्रयोग गर्न सुरक्षित स्थानमा राखे । नागहरू पनि फर्के । उपरोक्त नाग-मण्डलमा नागहरूको मूर्ति र वाचा समेत लेखिराखेको छ भनिएको छ ।

लिच्छवि राजा वृषदेवको समय वि.सं.को पाँचौं शताब्दीतिर पर्दछ । लिच्छवि राजा गुणकाम देवको समय वि.सं. १०४३ तिर पर्दछ। उनको राज्य कालमा परेको अनिकाल माथि लेखिएको बमोजिम हटाई शान्तिकराचार्य फेरि शान्तिपुरभित्रै समाधिष्ठ भए । अनि कान्तिपुरका राजा प्रताप मल्लको राज्य कालमा पनि खडेरी पऱ्यो । अरू सवै उपाय विफल भयो । अनि राजा प्रताप मल्ल केही गुभाजूहरूसहित शान्तिपुरभित्र पस्न तम्सिए । यो वि.सं.१७१५ सालको घटना थियो । गुभाजूहरू भित्र पस्न सकेनन् । राजा प्रताप मल्ल एक्लै भित्र पसेर नाग मण्डल बाहिर ल्याए । घाममा देखाउनेबित्तिकै पानी पऱ्यो । राजा प्रताप मल्लले त्यस वखत आफूले त्यहाँभित्र देखेको जीव, वनस्पति, सुरूङको बनावट, आफूलाई भएको अनुभव इत्यादिवारे वर्णन 'वृष्टिचिन्तामणि स्तोत्र' मा गरेका छन् । यसबारे उनले पौभाल चित्र पनि लेखाउन लगाए । शान्तिपुरभित्र पस्दा शान्तिकराचार्यको समाधिष्ठ शरीर कङ्काल मात्र भए पनि सजीव देखेको र उनैको अनुमति लिएर भित्र पसेको

कुरा पनि राजा प्रताप मल्लले लेखेका छन् । यही वृष्टिचिन्तामणि स्तोत्र र पौभाल चित्रको आधारमा देवहर्षजी र गौतमवज्रजीले यस शान्तिपुरको सुरुङभित्रको विवरण सविस्तार आ-आफ्ना लेखहरूमा गर्नुभएको छ ।

यी शान्तिकराचार्यलाई स्वयम्भू पुराणमा 'अपरिमित आयु' भएका भनिएको छ । 'आष्फाणिक' समाधिमा बस्न सकेनहरूको आयु अपरिमित हुनसक्छ भनिन्छ ।

यसरी शान्तिपुर तान्त्रिक रहस्यले परिपूर्ण एउटा अद्भुत सुरुङ हो । तीन सय वर्षअगाडि राजा प्रताप मल्लले शान्तिकराचार्यको समाधिस्थ सजीव मूर्ति देखेको एवं भित्र पसेर नाग-मण्डल बाहिर लैजाने अनुमति मागेको कुरा लेख्नु निक्कै घतलाग्दो छ । वरूण र अरू आठ नागको रगतबाट नाग-मण्डल लेखिएको कपडाको पौभाल तामाको ढुंग्रोजस्तो वस्तुमा तालाबन्द गरेर सुरुङको तल्लो कोठामा राखिएको छ भनेर प्रताप मल्ल राजाले लेखाएका छन् । कथंकदाचित् अहिले सुरुङभित्र पस्ने प्रवन्ध हुन सकेमा यस विषयमा निक्कै प्रकाश पर्नेछ ।

यस शान्तिपुरभित्रका भित्तामा अझ पनि देखिने भित्तिचित्र कलात्मक दृष्टिले प्रशंनीय छ ।

## नागपुर



शान्तिपुरलाई घुम्दै उक्लेर माथि स्वयम्भू चैत्यको प्राङ्गणमा फेरि पुगेपछि गर्भको फेदनिर उत्तरतिर कर्मराज महाविहार पुग्ने ठाउँनिर भूइँमा खाल्टोमा गाडिएको जस्तो एउटा लाम्चो ढुंगा देखिन्छ । जल तत्वको प्रतीक गराएर बनाइएको 'नागपुर' यही हो । यसलाई 'बसि गाल' अर्थात् नागहरूको खाल्टो पनि भनिन्छ ।

---

१) पञ्चपुर :- 'पुर' शब्दलाई हामीहरू अहिले 'शहर, गाउँ वा बस्ती'को अर्थमा प्रयोग गरे पनि यसको अर्थ 'घर, निवास' पनि हुन्छ ।



# हारती मन्दिर र मूर्ति

स्वयम्भू चुचुरोस्थित मूल चैत्य र पञ्चपुरहरूबाहेक अर्को एउटा आकर्षण केन्द्र हारती माईको मन्दिर हो । बिहान सबेरै कुखुरा नबास्दैदेखि 'छ्या हाय्किगु' गर्न राखिने माटोको घैंटोको लाम, वज्राचार्य गुभाजु गुरूबाट दिउँसो चारपाँच बजेसम्म पनि चलिरहने, चुचुरामा अन्यत्र कहीं पनि नचलेको भिन्नै महायानी विधिको पूजा इत्यादिले मात्र हारती माईको विशेषता रहेको होइन कि यसको मन्दिर पनि स्वयम्भू शिखरमा एउटै मात्र पाइने पागोडा शैलीले विशिष्ट बनेको छ । मन्दिरभित्रको देउता आफ्नै आङमा दायाँबायाँ गरी पाँचवटा बालमूर्ति बोकेर बसेकी कालो ढुंगाको एउटा स्त्री मूर्ति हो । यस स्त्री मूर्ति अरूहरूको केटाकेटीहरू चोरेर ५०० सम्म पुऱ्याउने एउटी यक्षिणी[1]को तथा तिनले बोकेका पाँचवटा केटाकेटीका मूर्ति ती नै ५०० केटाकेटीहरूका प्रतीक हुन् भनिन्छ । यस देउतालाई

बिफर देउताको रूपमा पनि धेरैले पूजा गर्दछन् । फेरि केटाकेटीहरू फसक्क फसक्क फस्किने, माता जाने बेलामा जस्तो गरी नर्मिने अर्थात् निमोनियाको रोग हुने बेलामा जस्तो भयो भने पनि यही देउताले छोप्न आएको भन्दछन् र त्यसबाट मुक्त हुन यस देउताको वज्राचार्य गुरुको विधिअनुसार पूजा गरिन्छ । यस देउतालाई छोटकरीमा 'माथिको देउता' अर्थात् स्वयम्भू डाँडामाथि रहने देउता वा 'अजिमा' पनि भन्दछन् । नेपालभाषा शब्द 'अजिमा'-को शब्दार्थ 'बज्यै' वा 'मुहेनी' हुन्छ । केटाकेटीहरूको रक्षा गर्ने देउताको रूपमा पूजिने हुनाले नै लोक बोलीमा यस्तो 'अजिमा' नाउँ रहन गएको हुनुपर्दछ । फेरि, यस देउताले काखी च्यापेर राखेका बालमूर्तिहरू ६ वटा भएको विश्वास पनि गरिन्छ तथा यिनीहरू धनभाजु, धनमयजु, वासिंभाजु वासिंमयजु र लाटाभाजु लाटामयजु भनिन्छन् । तर महायानी गुरु अमोघवज्र बज्राचार्यको भनाइअनुसार ५०० केटाकेटीको प्रतीक बालमूर्ति पाँचैवटा मात्र हुन्, ६ वटाको कल्पना केवल किंवदन्ती मात्र हो ।

यस स्त्री देउताको सम्बन्धमा अरू विचार गर्नुभन्दा अगाडि यसलाई 'हारती माता' किन भनिएको भन्ने कुरातिर नै लागौं । यस हारती माईको विषयमा 'हारत्यवदान' भन्ने एउटा किताब छ । त्यसमा लेखिएअनुसार केटाकेटीहरू चोरेर दुःख दिने यक्षिणीको कथाको सार यस प्रकार छ- एउटी यक्षिणीले मानिसहरूका केटाकेटी चोरेर ऊधुम मचाएकी थिई । पहिले त थाहा नै भएन । धेरै केटाकेटीहरू चोरिएपछि एउटी यक्षिणीले चोरेको पत्ता लाग्यो । तर उसलाई कसैले समात्न वा रोक्न सकेन । राजाकहाँसम्म कुरा पुग्यो । राजाबाट पनि अनेक कोशिस गरियो । तर चोरिएका बालकहरूको पत्तो लागेन । यक्षिणीले ती बालबालिकाहरूलाई अगम्य सुरक्षित ठाउँमा लुकाएकी थिई । राजा आखिर हार मानेर भगवान् बुद्धको शरण पर्न गए । राजाको हैरानीको कारण सबै बुझेपछि भगवान् बुद्धले चाहिंदो जुक्ति गर्ने आश्वासन राजालाई दिएर फर्काए । तदनुसार भगवान्ले ती यक्षिणीले चोरेर जम्मा पारेका ५०० केटाकेटीहरूमध्ये सबभन्दा राम्रो होनहार बालक एकजना लुकाइराख्नुभयो । कति खोज्दा पनि ती यक्षिणीले त्यो बालक फेला पार्न सकिन । आखिर कायल भएर ऊ पनि भगवान्कै शरण पर्न आई । भगवान्बाट त्यसलाई आज्ञा भयो, 'तिम्रा पाँचपाँच सय केटाकेटीहरू छँदै छन् नि । जाबो एउटा हराएकोमा पनि यतिको बिलौना गर्नुपर्दछ र ?' यक्षिणीले जवाफमा भगवान्सित प्रार्थना गरी, 'होइन भगवन्, मेरो असाध्ये मन परेको बालक त्यही भएको हुनाले नै मेरो मन रहन नसकेको हो ' त्यसपछि भगवान्बाट आज्ञा भयो, 'पाँच सय बच्चाहरूमध्ये एउटा हराउँदा त तिम्रो यत्तिको चित्त दुःख्छ भने यी केटाकेटीहरूलाई हरण गरेर ल्याउँदा यिनका आमाबाबुहरूको मन कति रोयो

होला त्यो पनि त सोच्नुपर्छ नि ।' भगवानको यस वचनले यक्षिणीको मनमा ठूलो असर पऱ्यो । भगवान्को उपदेशबाट उनको मानसिक परिवर्तन भयो । तिनले पश्चात्ताप गर्दै भगवान्सँग क्षमा मागिन् । भगवान्बाट तिनलाई अगाडिको कुकृत्य छाडेर बालकहरूको रक्षागर्ने आज्ञा मिल्यो । तदनुसार तिनी त्यस बेलादेखि बालकबालिकाहरूको संरक्षिका भएर बस्न थालिन् । यही कुराको प्रतीक हारती माईको पूजा गरिएको हो । यिनको नाउँ 'हरति इति' हारती हुन गएको देखिन्छ । केटाकेटीहरूको रोग हरण गर्ने हुनाले यसो भनिएको हुनु पर्दछ ।

हारती माताको नाउँले पुकारिने देउता महायानी तन्त्रअनुसार महायानी धर्मधातु चैत्य बनाउँदा हारती माता र महाकालका मूर्तिहरू राख्नुपर्ने नियम बमोजिम स्वयम्भू मूल चैत्यको आसपासमा यो हारती माईको मूर्ति राखिएको हो । महाकाल र हारती माता बुद्ध शासन बिगार्न खोज्नेहरूको दमन गर्ने अभिभारा बोकेका 'धर्मपाल' हुन् । महाकाललाई भैरव भन्ने चलन भएजस्तै भैरवीलाई 'अजिमा' अर्थात् बज्यै भन्ने चलन पनि नभएको होइन । हारती माई पनि यथा समयमा भैरवीजस्तै 'अजिमा' भनिन थालेको हुन सक्छ । विविध रूपमा यिनको पूजा पछिकै सिर्जना देखिन्छ । महाकाल र हारती माईको पूजाविधि पनि स्वयम्भू टाकुरास्थित ध्यानी बुद्धहरूको मूर्तिहरूको पूजाविधिभन्दा भिन्न छ । हारती माईको पूजा स्वयम्भू पुराणमा लेखिएअनुसार महायानी विधिले हुन्छ र मन्दिर पनि पागोडा शैलीको छ ।

हारती माईको बिफर देउताको वा केटाकेटीहरू झस्किने-तर्सिने रोगको देउताको रूपमा पूजा पञ्चरक्षा विधान शीर्षक किताबमा लेखिएबमोजिम भएको हो । केटाकेटीहरूलाई हुने बिफर, ठेउला आदि पाँचवटा रोगका रक्षक देउताहरूमध्ये हारती माई पनि एउटा मानिएको छ । यो चलन पछि नै चलेको देखिन्छ ।

हारती माताको वर्तमान मन्दिर पागोडा शैलीको बनेको छ । यिनको पुरानो मूर्ति चाहिँ श्री ५ महाराजाधिराज रणबहादुर शाह स्वामी बने पछि वि.सं. १८५६ तिर "गुहुको धूप दिई उखेली बिगारेर फ्याक्न लगाए ।[१]" वर्तमान मूर्ति त्यसपछि बनाइएको हो ।

---

१) **यक्षिणी :- यक्ष-यक्षिणीहरू देव योनिका हुन् । उनीहरू कुबेरका सेवक हुन् ।**

१) **"गुहुको धूप.......... लगाए ।" हेर्नुस् केशर पुस्तकालयको वंशावली, प्राचीन नेपाल २४ ।**

# अनन्तपुर -प्रतापपुर



स्वयम्भू टाकुरामा मूल चैत्यको पूर्वतिर दायाँबायाँ कमलको फूल आकारको भावले बनाइएका दुइटा स्तम्भ पनि मूल चैत्यको माथै टाढैबाट देखिन्छन् । यी स्तम्भ कान्तिपुरका राजा प्रताप मल्ल (वि.स. १६९८-१७३१) ले बनाएका हुन् । यिनको निर्माणबारे वंशावलीहरू (राजभोग माला, प्रा.नं.१८, ६) मा यस्तो लेखिएको पाइन्छ, 'सिंभुका चैत्याकार यकै प्रासाद सांभा छैन भनी स्वेच्छाले पार्श्वस्थ युगम देवालय बनाउँला भन्दा स्वयम्भूको इक्षा भयान र राजा कोप भई ६ माससम्म शून्यालय (अर्थात् मानिसहरू जान नपाउने) गरी राखे स्वयम्भूकन बलसंग मनाइ पार्श्वविषय कवीन्द्रपुरप्रतापपुर नाम गरी अगम आगम बनाइ मध्य भागमा बडो वज्र कुलिस बनाइ स्थापना गरि बौद्ध रूपकन जगाया... ।'

यसरी यी पुरहरूको संख्या वि.सं. १७१२-१४ तिर निर्माण भएको थियो । यिनीहरूलाई विदेशी लेखकहरूले पद्माकर स्तम्भ (लोटस् पिलर) भन्ने गरेका छन् । यिनीहरूमा दक्षिणपट्टिचाहिँ अनन्तपुर र उत्तरपट्टिको चाहिँ कवीन्द्रपुर वा प्रतापपुर भनिन्छन् । यो अनन्तपुर नाउँ राजा प्रताप मल्लका एकजना महारानी अनन्तप्रियाको नाउँबाट रहन गएको हो । अनन्तपुरमा भित्रबाट माथि जान हुन्छ, प्रतापपुरमा हुँदैन ।



यी प्रतापपुर-अनन्तपुर शैलीका मन्दिर अर्थात् तलातला नछुट्टिकन त्यसैमाथि चुच्चो परेर गएको स्तूपाकारको मन्दिर नेपाली वास्तुकलामा 'गन्थकूट देवल'[1] भनिन्छ ।

---

१) **गन्थकूट देवल :- हेर्नुस् पूर्णिमा सं. १६, पृ. ३७९ ।**



# बज्र

पूर्वतिरको सिंढी चढिसकेर टाकुरामा पुग्नेबित्तिकै सामुन्ने गोल लट्ठामा उठाइएको सुनको बज्र देखिन्छ । स्वयम्भू चैत्य धर्मधातु चैत्य भएकोले यहाँ बज्र हुनु स्वाभाविक हो । महायानमा बज्रको अत्यन्त ठूलो महत्व बताइन्छ । बज्रबाट नै महायानको एक शाखा बज्रयानको नाउँ रहन गएको छ । बज्र बौद्ध दर्शनको शून्यताको प्रतीक मानिन्छ । यसबाहेक बज्रको अर्थ अनेक प्रकारले व्याख्या गरिन्छ । तीमध्ये बज्रको अर्थ "दृढं सारमसौ वीर्यमच्छेद्याभेद्य लक्षणम्, अदाहि अविनाशिश्च शून्यता बज्रमुच्यते" अर्थात् 'दृढ, सार इत्यादि उपरोक्त गुणले संयुक्त महाकरूणा, प्रज्ञोपायात्मक, सहजसुखमय अनुत्तर सिद्धि' हुन्छ । (हेमराज शाक्यजीको भनाइअनुसार) जे होस् यो बज्र धर्मधातु चैत्यको अभिन्न अङ्ग हो ।। यसैले यसलाई अग्रिम महत्व दिएर वैरोचनबुद्ध मूर्तिकै अगाडि सिंढीबाट माथि उक्लँदा सबभन्दा प्रमुख भनेजसो स्थानमा राखिएको हुनुपर्दछ । यो बज्र धर्मधातु मण्डलको खम्बामा ज्योतिष चक्रका पशुपंक्षीहरू अर्थात् मुसा, साँढे, बाघ, खरायो,बिजुली, सर्प, घोडा, भेंडा, बाँदर, चरा, कुकुर र सुँगुर इत्यादिका चिन्हहरू कुंदिएका छन् । यस बज्रलाई सुनको मोलम्बा र यसका खम्बाको दायाँ बायाँ ढुंगाका सिंह राख्ने राजा प्रताप मल्ल हुन् ।



# देवावतार बोधिसत्व मूर्ति

स्वयम्भू टाकुरामा मूल चैत्य, पुर, मन्दिर, गुम्बाहरूबाहेक मानमाना चैत्य, मूर्ति, समयसमयका शिलापत्र आदि धेरै छन् । यस मूर्तिहरू मध्ये असाधारण रूपमा ठूलो ढुंगे मूर्ति एउटा देवावतार बोधिसत्वको हो । करिब १० फीट जति अग्लो यो मूर्ति सत्य युगको मानिस यत्तिको अग्लो हुन्थ्यो भन्ने देखाउन राखिएको भन्ने लोकोक्ति छ । तर यो मूर्ति 'देवावतार बोधिसत्व'- को हो जो १०८ बोधिसत्व मध्ये एक हुन् । यो मूर्ति हारती मन्दिरको पश्चिमतिर रहेको सतलको भित्ताको बाहिरपट्टि खोपामा उत्तराभिमुख गरेर राखिएको थियो । त्यो ठाउँ अन्तर्राष्ट्रिय बौद्ध पुस्तकालयको भवन बनाउन भत्काउनु परेकोले स्वयम्भू विकास मण्डलले त्यस मूर्तिलाई अलि पश्चिमतिरको कुनामा पूर्वाभिमुख गरेर सार्न लगाएको थियो । यो मूर्ति दशौं शताब्दीको हुनुपर्दछ भन्ने पुरातत्व विभागका विशेषज्ञहरूको भनाइ छ । ठीक यस्तै तर यो भन्दा अलि सानो अर्को मूर्ति एउटा शान्तिपुरको मन्दिरको ढोकाको बाहिरी देब्रे भित्तामा पनि राखिएको छ ।



# चैत्य, मूर्ति र शिलालेखहरू

स्वयम्भू टाकुरामा टडकारै देखिने सानसाना चैत्य, ठूला- साना मूर्ति एवं शिलालेखहरू मनग्गे छन् । यस्ता मूर्ति र शिलालेखहरू कति हराए, कति हिनामिना भए होलान् । बाँकी रहेकामा केही मूर्तिहरू स्वयम्भू विकास मण्डलले बनाएको मूर्ति संग्रहालयमा राखिएका छन् । यस  संग्रहालयमा र बाहिर यताउति रहेका मूर्ति र अभिलेखहरू कतिपय महत्वपूर्ण र अध्ययन योग्य छन् ।

ठूलो बुद्ध मूर्तिमा शान्तिपुरको ढोका सामुन्ने पश्चिमतिर पूर्वाभिमुखी अक्षोभ्य बुद्धको मूर्ति एउटा छ। शान्तिपुरको भित्तामा र सेरोफेरोमा अनेकौं दुर्लभ मूर्तिहरू छन्। शान्तिपुरको ढोका सामुन्ने अलिपर दाहिनेतिर पनि दुर्लभ मूर्तिहरू कैयौं छन्। यहाँ हारती मन्दिरको पछाडि उत्तरपूर्वतिर रहेको सानो मन्दिरभित्र राखिएको ठेक्को बोकेको मानिसको मूर्ति एउटा पनि चर्चा गर्न लायक छ। मूल चैत्यको पश्चिममा अमिताभ बुद्धको सामुन्ने उभ्याएर राखिएका धातुका तारा मूर्ति दुइटा पनि छन्। सानसाना किसिमकिसिमका चैत्यहरू त थुप्रै देखिन्छन्। शाक्य र वज्राचार्यहरूको चूडा कर्म गर्ने क्वापाछें निर रहेको साम्हयां गुं धर्मधातु विहार पनि उल्लेखनीय छ।



शिलालेखहरू ठूलासाना यताउति परिरहेका धेरै छन्। हारती मन्दिरको दाहिनेतिर रञ्जनाक्षरले लेखिएको ठूलाठूला शिलापत्रहरू, उत्तरतिरको चौतारको भित्तामा टाँसिएका सुल्तान शमशुद्दीनले गरेको तोडफोडको बयान भएको शिलालेख, त्यसपछि स्वयम्भूको फेरि पुनर्स्थापना भएको कुरा लेखिएको शिलापत्रहरू, प्रतापपुर - अनन्तपुरनिर रहेको लिच्छविकालीन शिलापत्र, चून मिलाउने खाल्टो मुनि गाडिएको अर्को एउटा लिच्छविकालीन शिलापत्र आदि कैयौं महत्वपूर्ण शिलालेखहरू अझ पनि विद्यमान छन्।

यिनीहरू सबैको सुरक्षा एवं संरक्षण ज्यादै जरूरी छ।



# धर्मचक्र महाविहार

श्री ५ रणबहादुर शाहको राज्यकाल सं.१८४३ मा देवाधर्मा अर्थात् भूटानबाट एकजना लामा काठमाडौं आए । यिनी त्यस लामाका नाति थिए जसलाई केही समय अगाडिका गोरखाका राजा श्री ५ नरभूपाल शाहले आफूकहाँ झिकाएका थिए र जसले गरिदिएको उपायबाट श्री ५ पृथ्वीनारायण शाह जन्मेका थिए । राजाबाट यिनलाई आफ्नो पारिश्रमिकको रूपमा केही माग्न आज्ञा हुँदा यिनले भनेका थिए, "महाराज, हजुरको कत्रो ठूलो राज्य छ र मैले के मागुँ ? मेरो उपायबाट जन्मने हजुरका छोराले धेरै राज्य जित्नेछ र उनैसँग मैले माँगुला ।" त्यही घटनाको बेहोरा भएको नरभूपाल शाहले गरिदिएको लालमोहर नै ती भूटानी लामाले देखाउँदा श्री ५ रणबहादुर शाह खुशी भएर उनले मागेअनुसार उपत्यका भित्रका २० खेत र पहाडका १५/२० गाउँ बिर्ता बकसको लालमोहर गरिदिए । यसरी पाएको जग्गा सबै ती लामाले स्वयम्भूको प्रित्यर्थ एउटा गुम्बा बनाएर गुठी राखिदिए । स्वयम्भू टाकुरामा मूल चैत्यको पश्चिम हारती मन्दिरको सामुन्ने दाहिनेतिर सिंढी उक्लेर जाने गुम्बा उनै भूटानी लामाले बनाएको हो । यो गुम्बा हिजोआज धर्मचक्र महाविहार कहिन्छ ।

यस गुम्बामा सुनका मोलम्बा लगाएका ध्यानी बुद्ध मूर्तिहरू, माने, पौभाल, चित्र इत्यादि छन् । सुनको मोलम्बा लगाएको ठूलो पानसमा कहिले पनि ननिभाईकन रातदिन बालिराख्ने बत्ती एउटा यहाँको विशेषता हो । यहाँको पूजाआजा र रेखदेख लामाहरू र स्थानीय तामाङहरूद्वारा हुन्छ ।

श्री ५ सुरेन्द्रको राज्यकालमा वि.स. १९११-१२ मा तिब्बतसँग नेपालको लडाइँ भएको बेला भूटानले तिब्बतलाई मद्दत दिएको भन्ने कारणले केवल ५०० मात्र उठती हुने जग्गा बाँकी राखी अरू सबै जग्गा सं. १९१२ मा जफत गरिएको थियो । तर त्यस बेला तटस्थ रहेको भन्ने भूटानको भनाइअनुसार जफत गरिएका जग्गामध्ये केही फर्काइएको पनि थियो । श्री ५ महाराजाधिराज रणबहादुर शाहबाट दिइएको गुठी आजसम्म पनि चालू छ । पछि यो भूटानी गुम्बा आगलागीले बिग्रेको थियो । अनि सिक्किमी महारानी श्री ३ चन्द्रशमशेरकी महारानीसँग मीत लाउन यहाँ आएको बखत उनीबाट यस गुम्बाको जीर्णोद्धार भएको थियो । त्यसमा राखिएका बुद्ध मूर्तिहरू त काठमाडौंकै तुलाधर साहूहरूबाट प्रदान गरिएका थिए ।



# कर्मराज महाविहार

स्वयम्भू टाकुराको पूर्वोत्तर छोरमा एउटा नयाँ अग्लो गुम्बा रहेको छ । यहाँ भू-स्पर्श मुद्राको ध्यानी बुद्धको ठूलो सुनौलो मूर्ति छ । यस मूर्तिको परिक्रमा गर्न यसको वरिपरि मझेरी बनाइएको छ । यहाँ दिनभरि भनेजसो तिब्बती लामाहरू र उपासक-उपासिकाहरू समयसमयमा भेला भएर आफ्नै विधिले पूजाप्रार्थना गरिरहेका पाइन्छन् । यसलाई हिजोआज कर्मराज महाविहार भन्दछन् । यो विहार अहिले पूर्णतया तिब्बती ढंगको गुम्बा देखिन्छ ।

तर यो विहारको शुरू तिब्बती गुम्बाको रूपमा भएको थिएन। वि.सं. २०११ सालतिर एउटा विहार बनाउन लगाइएको थियो। सं २०१५ साल वैशाखतिर यसको निर्माण सम्पन्न भएको थियो र यस विहारको नाउँ 'विश्वशान्ति महाविहार' राखिएको थियो। यसको निर्माण एवं बुद्ध मूर्तिमा सुनको मोलम्वा लगाउने काम धेरै चन्दादाताहरूको सहयोगबाट सम्पन्न भएको थियो। यस विश्वशान्ति महाविहारमा तिब्बतबाट आएका धम्मार छाम्वा लामा बस्न थाले। यहाँ ठूलो बुद्ध मूर्ति जड्ने काम सकिएपछि यसको विधिपूर्वक प्रतिष्ठा गर्न एकजना लामा बोलाइए। ता लामा कहिने एकजना मंगोलियन लामा आइपुगे। विहारको जिम्मा यी ता लामालाई सुम्पेर धम्मार छाम्वा लाम तिब्बत फर्के। त्यस विशाल बुद्ध मूर्तिको प्रतिष्ठा कार्य प्रचलित विधिअनुसार नगरेको कारणले यी ता लामा यो विहार छाडी फर्केर जानुपरेको थियो।

यसरी यो विश्वशान्ति महाविहारमा लामाको स्थान केही समयसम्म खाली नै रह्यो। विहारमा लामा खाली भएकोले सानु गुरूजु, चिनिया लामा, कुलरत्न धाख्वा, ज्ञानज्योति आदि ४५ जवानले तिब्बतबाट आएका करमापा लामालाई लिखित स्वीकृतिद्वारा यो महाविहार जिम्मा लाइदिए। करमापा लामाले यस विहारको पुरानो थितिरीतिहरूको उपेक्षा गर्दै यसको पूर्ण तिब्बतीकरण गर्न लागे। करमापा लामाको यस्तो व्यवहारदेखि चित्त नबुझेका भक्तजन र विहारका पुराना अधिकारीहरूले वि.सं. २०१८-१९ सालतिर श्री ५ को सरकारको समक्ष उजुरी पनि गरे। केही समयसम्म मुद्दा चल्यो। आखिर २०१९ सालतिर भएको सरकारी निर्णय बमोजिम यो विहार करमापा लामालाई नै सुम्पियो। अगाडिको विश्वशान्ति महाविहार सम्बन्धी अभिलेख र अरू सामग्रीहरू सबै बाहिर भजन गर्ने पाटीमा फ्याँकिए। यसरी महायानी विहारको रूपमा शुरू भएको विश्वशान्ति महाविहार तिब्बती गुम्बामा बदलियो। यसको नाउँ कर्मराज महाविहार राखियो।

# पुराण स्वयम्भू

मञ्जुश्री चैत्य रहेको ठाउँबाट उत्तर लाग्ने बाटोमा अलिकति गएपछि डाँडोको चुचुराको उत्तरी छोरमा देखिने चैत्य पुराण स्वयम्भू चैत्य कहिन्छ । हाल यस चैत्यको वरिपरि होचो पर्खाल बनाइएको छ र अनेकौं मूर्तिहरू यताउति स्थापना गरिएका छन् । यही चैत्यका पूर्वी फेदनिर बुद्ध पादुकाको प्रतीक ढुंगाका पैताला दुइवटा पनि राखिएका छन् । मञ्जुश्री र उनका स्त्री-शक्तिहरूले आफ्नो गर्नुपर्ने काम सिध्याएर आफ्नै शक्तिबाट निकालेको ज्योतिले आकाशमा आफ्ना शरीरहरू भष्म गरे । त्यही भष्म खसेको ठाउँमा त्यही भष्म गर्भमा राखेर यो चैत्य बनाइएको भनिन्छ ।

स्वयम्भू पुराणअनुसार यहाँ मञ्जुश्रीले धर्म प्रचार गरेका र स्वयम्भूको महत्व बताएका थिए । भगवान् बुद्ध उपत्यकामा आउनुहुँदा यहीं बस्नुभएको थियो । मञ्जुश्रीले स्वयम्भूको महिमा र स्वयम्भू पुराण बताएको ठाउँ यही भएकोले यसलाई पुराण स्वयम्भू भनिएको हो । यसलाइ पुच्छाग्र चैत्य पनि भन्दछन् ।

यो चैत्य शान्तिकराचार्यले बनाएका थिए । माथि चर्चा गरिएको बुद्ध पादुका भगवान् बुद्धले धर्मदेशना गर्नुभएको ठाउँमा बनाइएको भनिन्छ । यो पुच्छाग्र चैत्य मुनि राखिएजस्तै दुइटा पादुका पूर्वी सिंढीको माझतिर पनि छ । महायानी दर्शनका अरू कैयन मूर्तिहरू पनि चैत्यका गिर्दाका पर्खालका खोपाखोपामा राखिएका छन् । यो चैत्य घुम्न सिध्याएर ओर्लने ठाउँनिर दाहिने कुनामा एउटा डल्ले ढुंगा छ । यो बासुकी नाग भनिन्छ । यी वासुकी नागलाई मञ्जुश्रीले स्वयम्भू डाँडाको रक्षार्थ राखेको मानिएको छ ।

यस चैत्यबाट मोटर बिसौनीतिर ओर्लने बाटाको बीचमा एउटा मन्दिरको भित्तामा राखिएका सारीपुत्र- मौद्गल्यायनका मूर्तिहरू पनि यहाँ उल्लेखनीय छन् ।



# पर्वस्थान

मञ्जुश्री चैत्यको नगीचै पूर्वतिर एवं पुच्छाग्र चैत्यको दक्षिणतिर अलिकति उकालो परेको ढिस्कोमा एउटा सानो चैत्य छ। भगवान् बुद्ध स्वयम्भू डांडामा बस्दा यसै ठाउँमा धर्मदेशना गर्नुहुन्थ्यो भनिएको छ। उहांको धर्मदेशना गर्ने आसन रहने ठाउँमा नै यो चैत्य वनाइएको छ। यसरी भगवान् बुद्ध स्वयले धर्मदेशना गर्ने ठाउँ याने ठूलो पर्वको ठाउँ भएकोले नै यस ठाउँको नाउँ 'पर्वस्थान' रहेको भनिन्छ। स्वयम्भू पुराणअनुसार भगवान् बुद्धले यही पर्वस्थानमा रहेर आफ्ना शिष्यहरूलाई स्वयम्भूको महिमा बताउनुभएको थियो। किरांत राजा जितेदस्तीको समयमा भगवान् बुद्ध उपत्यकामा आउनुभएको बारे स्वयम्भू पुराणमा बयान गरिएको कुरा ऐतिहासिक रूपले मिल्न आउँदैन।

मञ्जुश्री बोधिसत्वले आफ्नो संपूर्ण काम सिध्याइसकेपछि अन्त्यमा स्वयम्भू ज्योतिको प्रदक्षिणा गरेर यहींबाट अन्तर्ध्यान भए भनिएको छ।



# पश्चिमी चैत्य

शान्तिपुरको पश्चिमतिर रहेको सानो सिंढीबाट ओर्ह्लेर तल मोटर बिसौनीनिर आइपुग्ने ठाउँमा एउटा चैत्य छ। यो चैत्यको पूर्वी फेदमा एउटा वज्र पनि राखिएको छ। यो चैत्य माथिको स्वयम्भू मूल चैत्यमा रहेका पहिलेका ढुंगाका बुद्ध मूर्तिहरू राखेर बनाइएको हो। कान्तिपुरका राजा नृपेन्द्र मल्लले (वि.सं. १७३१-३७) स्वयम्भू मूल चैत्यमा सुनका बुद्ध मूर्तिहरू राख्न झिकेका पहिलेका ढुंगाका बुद्ध मूर्तिहरू राखेर यो पश्चिम चैत्य वनाइएका हुन्। स्वयम्भू मूल चैत्यका पुराना ढुंगे वुद्ध मूर्तिहरू सं. १४०६ मा सुल्तान शमशुद्दीनले तोडफोड गरी पोलेपछि सं. १४२९ सालमा कान्तिपुरका राजहर्ष भल्लोकले अर्का नयाँ मूर्तिहरू वनाउन लगाएर स्वयम्भू चैत्यमा स्थापित गरेका थिए। यस पश्चिम चैत्यमा अहिले रहेका मूर्तिहरू ती नै हुन सक्छन्।



# मञ्जुश्री चैत्य

स्वयम्भू मूल चैत्य रहेको टाकुराको हाराहारीमा पश्चिमतिर अर्को सानै टाकुरामा एउटा सानो मन्दिर वनाइएको छ । यही मन्दिर नै मञ्जुश्री चैत्य हो । यहाँ जान वनाइराखेको ढुंगे सिंढीको पुरानो बाटो कायमै छ । मोटर बिसौनी बनेपछि त्यहाँबाट पनि यस चैत्यमा जाने गोरेटो वनेको छ । यस चैत्यमा रहेको मञ्जुश्रीको प्रतीक मानिएको मूर्तिलाई सरस्वती देवी मानेर पनि भक्तजनहरू पूजा गर्दछन् । यसैले यो मञ्जुश्री चैत्य रहेको ठाउँ, स्वयम्भू सरस्वती स्थानको नाउँले पनि प्रसिद्ध छ । यो मञ्जुश्री चैत्य मञ्जुश्री यहाँबाट फर्केपछि उनका शिष्यले बनाएको भनेर केशर पुस्तकालयको वंशावलीमा लेखिएको छ । यसमा मञ्जुश्रीको मूर्ति राखिएको छैन । बोधिसत्व, मञ्जुश्रीहरूको मूर्ति वनाउने चलन चल्नुभन्दा अगाडि नै यहाँ चैत्यको निर्माण भएको बुझिन्छ । मूर्ति रहने ठाउँनिर ढुंगाको मण्डप आदि राखिएका छन् । मञ्जुश्री चैत्यको गिर्दाको पर्खालको खोपाखोपामा अनेकौं महायानी मूर्तिहरू राखिएका छन् ।



# सिंढीका मूर्तिहरू

स्वयम्भू शिखर, मञ्जुश्री शिखर, पुराण-स्वयम्भू शिखर, पर्वस्थान इत्यादि ठाउँहरूमा रहेका अनेकौं मूर्तिहरूवाहेक अरू ठूलासाना कैयौं मूर्तिहरू स्वयम्भू डाँडामा अन्यत्र यताउति पाइन्छन् । उदाहरणार्थ पूर्व दिशावाट स्वयम्भू शिखरमाथि जाने लामो ढुंगे सिंढीको फेद, हाँगा, टुप्पासम्म पनि वरिपरि र माभ्कमा विभिन्न ठूलासाना मूर्तिहरू देखापर्छन् । यस सिंढीमा र दायाँबायाँ राखिएका मूर्ति एवं अरू सांकेतिक शिलाहरूमध्ये प्रमुख केही निम्नलिखित अनुसार हुन् ।

## ठूलाठूला बुद्धमूर्तिहरू



पूर्वी सिंढी शुरू हुनेबित्तिकै फेदमा सिंढीको माभ्कैमा भनेजसो तीन-तीनवटा ठूला ढुंगाका ध्यानी बुद्ध मूर्तिहरू छन् । तल्लो चाहिँ तीनवटा मूर्तिमध्ये एउटा चाहिँ गौतमवज्र वज्राचार्यजीको भनाइअनुसार ने.सं. ७५७ अर्थात् वि.सं. १६९३ मा कान्तिपुरका राजा

लक्ष्मीनरसिंह र उनका छोरा प्रताप मल्लको राज्यकालमा राखिएको ध्यानी बुद्ध अक्षोभ्यको हो तथा माथिल्ला तीन मूर्तिहरूमध्ये दुइवटा चाहिँ ने.सं. १०१४ वि.सं. १९०५ मा श्री ५ महाराजाधिराज पृथ्वीवीरविक्रम शाहको राज्यकालमा राखिएका अक्षोभ्य मूर्ति हुन् । यस्तै अक्षोभ्य बुद्धको ठूलो मूर्ति एउटा शान्तिपुरको ढोका अगाडि दक्षिण-पश्चिमतिर पनि छ ।



## मण्डप

यो पूर्वी सिंढीको शुरूका दुई हाँगा जोडिएको ठाउँको बीचमा रहेको गोलाकार ढुंगा हो । यस ढुंगालाई यमलोकको द्वार भन्ने जनश्रुति छ । नर पुण्यरत्न वज्राचार्यजीको भनाइअनुसार यो मण्डप ढुंगा स्वयम्भू डाँडामा बस्ने एकजना निसन्तान व्यक्तिले सन्तान पाउने कामनाले गाईहरूलाई वफाएको गहुँ ख्वाउन गरेको हो ।



## सिखल लोहं (सिक्री ढुंगा)

लिच्छवि राजा गुणकामदेवको राज्यकाल (बि.सं. १०४३ तिर) मा खडेरी परेको थियो । राजाको अनुरोधमा पानी पार्ने उपाय गर्न त्यस बेला शान्तिकराचार्यले राजा गुणकामदेवलाई नै टौदहको कर्कोटक नाग लिन पठाए । राम्रो मिजासले भन्दा आउन नमानेकोले राजाले गुरूको निर्देशनानुसार कर्कोटक नागलाई सिक्रीले बाँधेर ल्याए । स्वयम्भू डाँडाको यही ठाउँमा आइपुगेपछि कर्कोटक नागले सिक्रीले बाँधिएर नै यहाँ आराम गरेको थियो । यही घटनाको प्रतीक यो सिखल लोहँ अर्थात् सिक्रीले बाँधिएको ढुंगा रहेको भनिन्छ ।



यो ढुंगा पूर्वी सिढीको शुरूका दुई हांगा जोडिएर मूल सिढीं शुरू हुने ठाउँनिर पर्दछ ।



### गणेशकुमार

पूर्वी सिंढीको बीच भागमा भनेजसो सिंढीको दायाँबायाँ गणेश र कुमारका मूर्तिहरू देखिन्छन् । गणेश र कुमार ढोकामा राखिने तान्त्रिक परम्पराअनुसार यी मूर्तिहरू यहाँ राखिएको हुनु पर्दछ ।

### पादुका

सिंढी आधाजसो चढिसकेपछि सिंढीको माझमा दुइटा सानासाना पादुका देखापर्छ । यी पादुका भगवान् बुद्धका पाउका प्रतीक मानिन्छन् ।

पुच्छाग्र चैत्यको मुनि पूर्वतिर पनि यस्तै सानासाना दुइवटा पादुका राखिएका छन् ।

## भैरव-भैरवी एवं महाकाल मूर्तिहरू

पूर्वी सिंढीको उकालामा यताउति स्वयम्भूको रक्षार्थ राखिएका भनिएका देव-देवीहरूका मूर्तिहरू धेरै पाइन्छन् । तीमध्ये भैरव-भैरवी अर्थात् आजु-अजिमाका सिन्दुरले अनुहार लेखिएका मूर्तिहरू एवं महाकाल, पद्मपाणि लोकेश्वरका मूर्तिहरू उल्लेखनीय छन् । भैरव-भैरवी र महाकाल स्वयम्भूका रक्षक हुन् । महाकाल बुद्धशासन बिगार्न खोज्नेहरूलाई दमन गर्ने अभिभारा बोकेका 'धर्मपाल' हुन् ।



भैरव-भैरवी पनि यस्तै महायानी मतानुसारका बुद्धशासनका रक्षक हुन् । भैरव वा महाकालका मूर्तिहरू सिंढी र टाकुरामा पनि निक्कै छन् । यीवाहेक क्षेत्रपाल पनि स्वयम्भूको रक्षक देउतामा लिइएको छ । विनाअनुहारको क्षेत्रपालको मूर्ति सिंढीको टुप्पातिर राखिएको छ ।



## पञ्चबुद्धका बाहनहरू

पूर्वी सिंढीको टुप्पानिर सिंह, हात्ती, घोडा, मुजुर र गरूडका मूर्तिहरू जोडा मिलाएर दायाँबायाँ राखिएका छन् । यिनीहरू पञ्चबुद्धका वहान अर्थात् वैरोचनको सिंह, अक्षोभ्यको हात्ती, रत्नसम्भवको घोडा, अमिताभको मुजुर, अमोघसिद्धिको गरूड हुन् । सिंढीमा देखिने यी वाहनहरूमध्ये गरूडको मूर्ति एउटा मात्र धेरै पुरानो हो । अरू उत्तिका पुराना होइनन् ।

## अन्य मूर्तिहरू

पूर्वी सिंढीको फेददेखि टुप्पासम्मै वीचवीचमा र दायाँवायाँ राखिएका माथि चर्चा गरिएका मूर्तिहरूबाहेक अरू पनि अनेकौं मूर्तिहरू र अनुहार नकुँदिएका डल्लो, चोसो वा थेप्चो परेका, भूईमा गाडिएका वा खोपाभित्र राखिएका ढुंगाका देव-देवी मानिएका मूर्तिहरू सिंढीको फेददेखि टुप्पासम्मै यताउति भेटिन्छन् । सिंढीको वीचमा पुग्दा देखिने मूर्तिहरूमा मायादेवी, लोकेश्वरका मूर्तिहरू उल्लेखनीय छन् । योगाम्वरको मूर्ति खोपाभरि राखिएको छ र यसमा अनुहार कुंदिएको छैन । प्रसूति मुद्राको महारानी मायादेवीको मूर्ति, मञ्जुश्रीको मूर्ति आदि पनि सिंढीमा देखापर्छन् । सिंढीको टुप्पाबाट १०-१२ खुड्किलामुनि एउटा उत्तराभिमुखी ढुंगा छ । यो कालिनाग भनिन्छ ।





# मूर्ति संग्रहालय

नैऋत्यकोणको सिंढीको बाटो अर्थात् उकालो लागेर वायुपुरपछाडि आइपुग्ने सिंढीको बाटोबाट आएर टाकुरामा पुगे वित्तिकै नयाँ बनेको एउटा मजबूत एक तले भवन अर्थात् टहरा देखापर्छ । यो टहरा स्वयम्भू विकास मण्डलले स्वयम्भू शिखरमा रहेका अनगिन्ती ठूलासाना मूर्तिहरू चोरिनु, हिनामिना हुनु, फुट्नु इत्यादिबाट बचाउन वि.सं. २०२८ सालमा बनाएको मूर्ति संग्रहालय हो । यसमा अहिले करिब १५० वटा जति भिन्नाभिन्नै युगमा बनेका अतिप्राचीन तथा दुर्लभ एवं अमूल्य मूर्तिहरू संरक्षण गरिएको छ । दर्शनार्थी र पर्यटकहरूलाई यी मूर्तिहरू तोकिएको समयभित्र देखाउने व्यवस्था गरिएको छ । हालसम्म पनि यो संग्रहालय स्वयम्भू विकास मण्डलद्वारा सञ्चालित भइरहेको छ ।

यस संग्रहालयको निर्माणको लागि धेरै महानुभावहरूले यथाश्रद्धा नगद र जिन्सी तथा सुनले मोलम्बा गरिएका अमूल्य-अमूल्य विविध मूर्तिहरू पनि चन्दा स्वरूप प्रदान गरेका थिए ।



# अन्तर्राष्ट्रिय बौद्ध पुस्तकालय

स्वयम्भू शिखरमा हारती मन्दिरको दाहिनेतिर नयाँ बनेका मानो भवन अन्तर्राष्ट्रिय बौद्ध पुस्तकालय हो । यो भवन स्वयम्भू विकास मण्डलले वि.सं. २०२३ सालमा स्थापना गरेको हो । साँच्चै भन्ने हो भने यो नेपालको एक मात्र बौद्ध पुस्तकालय थियो । यसमा स्वयम्भू पुराण, प्रज्ञापारमिता आदि नेपालको बौद्ध धर्मसम्बन्धी अमूल्य ग्रन्थहरू एवं झण्डै सम्पूर्ण त्रिपिटकहरूको माथि भारत, बर्मा, लङ्का, थाइ देश, जापान, तिब्बत आदि विभिन्न बौद्ध देशका बौद्ध ग्रन्थ, चित्र इत्यादिको सङ्कलन गरिएको थियो । यसबाहेक केही तिब्बती हस्तलिखित दुर्लभ ग्रन्थहरू पनि यहाँ जम्मा गरिएका छन् ।

यस पुस्तकालयको स्थापनाबाट बौद्ध धर्मको अध्ययन गर्न चाहनेहरूको निमित्त ठूलो अवसर र सुविधा मिलेको थियो । यसैले यहाँ दिनहुँ किताब हेर्न आउने मानिसहरू, विशेष गरेर विदेशी पर्यटकहरूको घुइँचो लाग्थ्यो । यहाँका किताबहरू प्रसङ्ग पुस्तक भएकाले घर लैजान दिइन्न । स्वयम्भू विकास मण्डलद्वारा सञ्चालित यस पुस्तकालय दिउँसो तोकिएको अवधिभर खुला रहन्थ्यो ।

यस पुस्तकालयको निर्माण गर्न पनि निकै श्रद्धालु महानुभावहरूले स्वयम्भू विकास मण्डललाई नगद र जिन्सीले सहयोग गरेका थिए । मूर्ति संग्रहालयजस्तै यो अन्तर्राष्ट्रिय बौद्ध पुस्तकालय पनि स्वयम्भू विकास मण्डलको रचनात्मक कार्यहरू मध्ये एक ज्वलन्त उदाहरण थियो । यसको निरन्तरता तड्कारो आवश्यक छ ।



# ज्ञानमाला भजन

विहान सबेरै स्वयम्भू शिखरको पवित्र थलामा पूर्वी सिंढीको टुप्पैनिर पाटीमा बसेर प्रभातको रमाइलो समयसित मिल्दो ताल र सुरमा भगवान् बुद्धको विशुद्ध उपदेशले ओतप्रोत भएको गीत गाउँदैरहने 'ज्ञानमाला भजन खलक' को सुमधुर भजनले त्यहाँको वातावरणलाई शान्तिमय र आनन्दमय गरिदिएको भान हुन्छ। अनि त्यहाँको चैत्य, पुर, वज्र, घण्टा, गुम्बा, यात्रु, भजन सबै त्यस थलाको अभिन्न अङ्ग बनेजस्तो लाग्छ।

यसरी हिजोआज शान्त र स्थिर रूपले भजन गरिरहेको हेर्दा यसबाट आ-आफ्नो चिन्तालाई बिर्सेर मनमा आनन्दको अनुभूति गर्नेहरू मात्र होलान् र यस भजनलाई बिगार्न खोज्ने वा यस खलकलाई दु:ख दिन चाहने कोही पनि थिएनन् होला जस्तो पनि लाग्छ। तर आजभन्दा ६४।६५ वर्षजति अगाडि ज्ञानमाला भजन खलकलाई ज्ञानमालाको भजन यसरी निश्चिन्त रूपले गर्न दिइएको थिएन। वि.सं.२००१-२ सालतिर यो ज्ञानमाला भजन गर्ने १७-१८ जना पक्रिए, थुनिए, ज्ञानमालाको किताब जफ्त गरियो, किताब बेच्नेको सर्वस्व गरियो। 'ज्ञानमाला' पहिलो पल्ट वि.सं. १९९५ मा छापिएको थियो। भिक्षु धर्मालोकले यो छापेर प्रचार गरेका थिए। ज्ञानमाला भजन खलक चाहिँ वि.सं. २००२ सालतिर बनेको थियो।

ने.सं. १०५०-१ सालमा त्यसबेलाका श्रामणेर कर्मशीलले उपत्यकाको बुद्ध धर्मलाई

पुनर्स्थापित गरिएछ, यहाँका जनतामा खासगरी बौद्ध धर्मावलम्बीहरुमा आएको जागरण दिन प्रतिदिन वृद्धि हुँदै आयो। त्यसकै प्रतिफल स्वरुप ने.सं. १०५७ सालमा काठमाडौंका थुप्रै बौद्ध नवयुवकहरुले नयाँ ढंगबाट बौद्ध भजन गाउने प्रथा जगाए। त्यसबखत स्वयम्भू उक्लने खुड्किलामा बिहान-बिहान राम भजन भइरहन्थ्यो। त्यसमा सक्रिय रहेका रत्नदास क्षेत्रपाटी, नरबहादुर मानन्धर (मार्गी बजाउने), रत्नबहादुर (ढोलक बजाउने), शुक्र बाज्या आदि थिए। दिनदिनै स्वयम्भू पूजा गर्न जाँदा उनीहरुले भजन गाइरहेको देखेर आफू पनि त्यस्तै बौद्ध भजन गाउने भनि प्रथा लिनेहरु थिए- रत्नबहादुर तण्डुकार, द्वारिका दास श्रेष्ठ, नरबहादुर मानन्धर, इन्द्रबहादुर मानन्धर, नुयु गुर्जु, नाथी भाई (रत्नदास) क्षेत्रपाटी आदि। उनीहरुलाई टेवहालका महारत्न सिखाकार सगीतज्ञ), सिद्धिरत्न सिखाकार (हार्मोनियम बजाउने), अष्टरत्न (कलाकार) हरुको सहयोग प्राप्त भयो। उनीहरुले स्वयम्भू स्थलमा प्रत्येक दिन बिहान बौद्ध भजन गाउन थाले। त्यस बखत अर्थात् ने.सं. १०५७ (वि.सं. १९९४) नेपालभाषामा बौद्ध भजनको पुस्तक थिएन। यसैकारण हिन्दी भाषाबाटै बौद्ध भजन गाउने गरिन्थ्यो।

अर्को साल अर्थात् वि.सं. १९९५ मा भिक्षु धम्मलोकले नेपालभाषाबाट ज्ञानमाला पुस्तक छपाएर भित्र्याउनु भयो। त्यसैबेलादेखि नेपालभाषाबाट पनि भजन गाउने शुरु भयो। यसैलाई ज्ञानमाला भजन भन्ने गरियो। यसरी नै ज्ञानमाला भजनको जन्म भयो। सर्वप्रथम प्रकाशित भएको ज्ञानमाला पुस्तक भिक्षु प्रज्ञाभिवंशले कुशीनगरको कसिया माथा कुँवर भन्ने स्थानबाट बुद्ध सम्वत् २४८२, ने.सं. १०५८, वि.सं. १९९५ सालमा प्रकाशित गरे। उता कर्मशील भन्तेले स्थापना गर्नु भएको संघमा भिक्षु, श्रामणेर, अनगारिकाहरु धमाधम वृद्धि भए। विभिन्न स्थानहरुमा उनीहरुले धर्मदेशनाका साथै स्थानीय जनतालाई बुद्धधर्मको वास्तविक सार र बुद्धको ऐतिहासिक व्यक्तित्वबारे ज्ञान प्रदान गरे। उनीहरुले बुद्धको उपदेश विश्वशान्ति र मैत्रीका पोषक एवं वैज्ञानिक रहेको कुरा बुझाए। नयाँ पुस्ताले बुद्धधर्म सम्बन्धमा नयाँ ज्ञान प्राप्त गर्दै आए। खास गरी पढेका जानेकाहरु बौद्ध विचारको वैज्ञानिकताबाट आकर्षित भए। परिणाम स्वरुप ज्ञानमाला भजन लोकप्रिय हुँदै आयो। यसबाट स्वयम्भूमा भेला हुनेहरुको संख्यामा पनि वृद्धि भयो। ने.सं. १०६३-४ सालतिर स्वयम्भूस्थित ज्ञानमाला भजन गर्ने पाटी जिर्णोद्धार मात्रै होइन फराकिलो ढंगबाट बनाउनु पर्ने भयो। जसकालागि आर्थिक श्रोत संकलन स्वरुप चन्दा उठाउने कुरा भयो। चोखाछेँ गल्लीका मोहन साहु, हेरामान साहु र कमलाक्षीका अष्टनारायण मानन्धर बीच आपसमा आर्थिक सहयोग गर्ने बारे प्रतिस्पर्धा नै भयो। शुरुमा ५० रुपैयाँदेखि वृद्धि हुँदै ४ सयसम्म पनि पुग्यो। यसरी ७ हजार रुपैयाँ जम्मा भयो। त्यही रकमबाट ज्ञानमाला भजनको पाटी पुनर्निर्माण भयो। जुन ने.सं. १०६४ अर्थात् वि.सं. २००० मा सम्पन्न भयो।



# मोटर चल्ने बाटो

स्वयम्भू डाँडामाथि मोटर चल्ने बाटाको अभावले नेपाल भ्रमणमा आउने पदाधिकारी र साधारण पर्यटकहरू स्वयम्भू शिखरस्थित मूल थलो नहेरीकन फर्कनु पर्ने स्थिति थियो । यही अभाव हटाउन सर्वप्रथम स्वयम्भू विकास मण्डलले वि.सं. २०१४ सालतिर डाँडाको निक्कै माथि तिब्बती मैत्री गुम्बाको उत्तर स्वयम्भू टाकुरा र मञ्जुश्री टाकुरा जाने बाटो छुट्टिने एवं आनन्दकुटी ओर्लने बाटो छुट्टिने ठाउँसम्म मोटर चल्ने बाटो तथा गाडीहरू पार्क गर्ने बिसौनी बनाउन श्री ५ को सरकारमा अनुरोध गऱ्यो । फलस्वरूप उपरोक्त पक्की बाटो र बिसौनी बन्यो । यसवाट स्वयम्भू र मञ्जुश्री टाकुरासम्म जान अलिकता मात्र हिंडे पुग्यो ।

यो बाटाको निर्माण समयमा ठाउँठाउँका मानिसहरूले बडो उत्साहित भएर ठूलो श्रमदान गरेका थिए ।

# पानीको व्यवस्था

स्वयम्भू डाँडाको टाकुरामाथि पानी पुऱ्याउने प्रसङ्गले अतीतको एउटा घटनाको याद गराउँछ-उहिले एक पल्ट श्री ३ महाराज जुद्धशमशेर हात्तीमा सवार भएर स्वयम्भू डाँडाको फेदीतिर आइरहेको देखेर एक हूल डाँडा-निवासीहरूले बाटाको छेउमा उभिएर बिन्ती गर्न लागे:- "महाराज, पानी खान पाऔँ, टाकुरामाथि पानी पुऱ्याइपाऔँ, सरकार !" तदनुसार जुद्धशमशेरले इन्जीनियरहरूसँग स्वयम्भू शिखरमा पानी पुऱ्याउन सकिने सम्भावनाबारे प्राविधिज्ञहरूसँग सरसल्लाह गरे। तर बालाजुको पानी भण्डार (खाने पानीको रिजर्भ्वायर)बाट तत्कालको स्थिति अन्तर्गत त्यसो गर्न प्राविधिक रूपले सम्भव नभएको देखिएपछि त्यो प्रसङ्ग थाती रहयो ।

उपरोक्त अभाव म आफैले पनि उक्त डाँडाको पाखामा अवस्थित आनन्दकुटी आवासीय विद्यापीठको प्रधान अध्यापक भएर त्यहाँ रहँदा डाँडाको उत्तरी फेदीस्थित कुवाबाट बोकेर ल्याइएको पानी किन्नु परेको स्थिति बेहोर्नु परेको थियो ।

तर यस्तो समस्याको समाधान गर्ने उपाय असन कमलाछी टोल निवासी नेपालमा पहिलो पल्ट साइकल पसल खोल्ने साहु अष्टनारायण मानन्धरले धेरै वर्ष अगाडि नै आँकिसकेका थिए। उनले अनेकौं झन्झट र थुप्रै सकस बेहोरेर वि.सं. २००३ साल दसैंको महाअष्टमीको दिन पेट्रोलले तान्ने जेनरेटर, पम्प आदि यन्त्र र साजबाजको सहाराले आनन्दकुटीमुनि डाँडाको उत्तरी फेदीको तल बग्ने खोल्साको पानी डाँडामाथि अवस्थित शान्तिपुर गुफा मन्दिरको पछाडि पुऱ्याइहालेका थिए। बिजुलीको निकासा गराएपछि पेट्रोलले चलाउने झन्झट पनि हट्यो। यसरी आपूर्ति गरिएको पानीद्वारा अरू सबै काम चले पनि पिउनको लागि भने उपयुक्त थिएन। त्यो अभाव पनि केही महिनापछि कमाण्डर-इन-चीफ मोहन शमशेरको परमाङ्गीबाट एक-इन्ची पानीको धाराको अस्थायी निकासा गराई हटाइयो।

अस्थायी धाराको निकासा म्याद सिधेपछि फेरिफेरि गराइरहनु पर्ने झन्झट नै थियो, तर स्थायी निकासा भने पाउन सकिएन।

डाँडाको उत्तरी पाखामुनि अवस्थित बारूदखानामा हल्चोकदेखि पिउने पानी २ इन्ची पाइपबाट ल्याइराखेको थियो। केही वर्षपछि त्यही पाइपबाट ३-४ इन्ची प्वाल पारेर पाइपबाट पानी डाँडामाथि लैजाने सरकारी निकासा गराइयो। बिजुलीको महसुल तिर्ने खर्च आफैले बेहोर्नु पर्ने छँदै थियो।

**प्रजातन्त्र आएपछि वि.सं. २००८ सालतिर योजना वैयक्तिक नभई सार्वजनिक सेवा भएकोले बिजुली महसुल माफी पनि गराइएको थियो । तर २०१७ सालको परिवर्तनपछि उक्त महसुल माफी नहुने भनेर सूचना आएको हुनाले फेरि मन्त्रालय धाईधाइकन वि.सं. २०२१ सालतिर विद्युत मन्त्री मैले (भुवनलाल प्रधानले) नै महसुल माफी कायमै राख्ने निकासा दिएँ ।**

तर वि.सं. २०२४ सालमा विद्युत विभाग नै प्राधिकरण गरिएको हुनाले अगाडिको माफिबारेको सरकारी निर्णय कायम राख्न नमिल्ने भयो । फेरि अनेकौं अधिकारीहरू कहाँ धाईधाई कन उपरोक्त महसुल खानेपानी विभागले बेहोर्ने निर्णय गराइयो । तर त्यसो गराउन यो सम्पुर्ण सेवा योजना संस्थापक अष्टनारायणको नाउँको सट्टा खानेपानी विभागको नाउँमा नामसारी गर्नुपर्‍यो ।

वि.सं. २०३५ सालमा उपरोक्त बारूदखानामा रहेको सैनिक ब्यारेक आनन्दकुटीमुनि नै सारिएपछि ब्यारेकलाई पानी चाहिएको निहुँमा उपरोक्त ३/४ इन्ची प्वालबाट दिइराखेको लाइन काटिदियो ।

यसरी स्वयम्भू डाँडामा पानी आपूर्ति गरिराखेको योजनाकै अन्त्य भयो- अष्टनारायण मानन्धरले सरकारी अड्डाखाना, अधिकारीहरूकहाँ धाउनुपरेको हैरानी, वेहोरेको सम्पूर्ण खर्च, पानी जस्तो वस्तु आपूर्ति गरेको सेवा सबै बिलाए । अहिले उनको नाउं मात्र होइन उनको सेवा योजनाका बचेखुचेको चिन्हहरू पनि धमाधम मासिँदै छन् ।

अष्टनारायणको उपरोक्त सेवा कार्यको क्रममा उनका छोरा तीर्थनारायण मेरो बालसखा र सहपाठी हुनाले म शुरूदेखि अर्थात् भारत, वेलायत, अमेरिकामा मशिन, पार्टपूर्जा, झिकाउने चिठ्ठीहरू मसौदा गर्ने काममा संलग्न रहन्थें । पछि नहर-विद्युत मन्त्री हुँदा बिजुली महसुल माफी पनि मैले नै कायमै गराइदिएँ । यसरी अष्टनारायणको उपरोक्त सेवा कार्यमा अलिकता मात्र भए पनि आफूले सघाउन पाएको सम्झना ममा अहिले पनि ताजै छ ।

प्रस्तुत प्रसङ्गमा नै मैले अरूकेही सघाउने अवसर पनि पाएको थिएँ । वि.सं. २०२३ सालमा म नहर-विद्युत मन्त्री छँदा मैले स्वयम्भू विकास मण्डलको निवेदनमा बालाजुवाट स्वयम्भू डाँडाको पूर्वी फेदीमुनिबाट छाउनीतिर लगिराखेको पाइपवाट एकलाइन पानि डाँडो माथि लैजाने निकास गरिदिएँ । त्यहाँ पानी सङ्कलन गर्न सानु रिजर्भ्वाएर वनाई त्यहाँबाट शिखर स्थित पानी ट्याङ्कीमा पानी भर्न आवश्यक खर्च र व्यवस्था गर्ने काम सबै स्वयम्भू विकास मण्डलको तरफवाट चन्दाद्वारा गरिएको थियो । त्यस संस्थाको चन्दा उपसमितिको अध्यक्ष पनि म नै

थिएँ। यस काममा अनेकौं दाता महानुभावहरूले दिल खोलेर चन्दा दिएबाट स्वयम्भू विकास मण्डल यो काम गर्न सफल भएको हो।

यता केही वर्ष अगाडिदेखि जर्मनीको जि.टि.जेड. संस्थाले पुरातत्व विभागसित संयुक्त रूपमा स्वयम्भू डाँडाको सर्वाङ्गीण विकासको लागि तयार गरेको गुरु योजना अन्तर्गत त्यहाँ पर्याप्त पानी ल्याएपछि अब त्यहाँ पानी छ्यालब्याल नै भएको छ।

अन्त्यमा माथि चर्चित स्वयम्भू डाँडामा पानी पुऱ्याउने योजनामा आफूले थोरै भए पनि सघाउन पाएकोमा मलाई ठूलो सन्तोष लागेको छ, साथै स्वयं सर्वशक्तिमान श्री ३ महाराज जुद्धशमशेरले आँटेर नसकेको काम पछि भए पनि सम्पन्न गराउन सक्दो योगदान गर्न पाएकोमा गौरव पनि।



# आनन्दकुटी विहार

स्वयम्भू डाँडाको उत्तरी पाखाको रमणीय निकुञ्जमा स्थापित यो विहार भिक्षु धम्मालोकबाट वि.सं. १९९८-९९ तिर स्थापना गरिएको थियो। यो ठाउँ खूब आनन्ददायी भएकोले यस विहारको नाउँ आनन्दकुटी राखिएको हो। यहाँ वर्माका श्रद्धालु बौद्धहरूबाट उपहार दिइएको फटकिरको बुद्ध मूर्ति स्थापित गरिएको छ। यहाँ वि.सं. २००४ सालतिर बनेको श्रीलङ्का चैत्य एउटा पनि छ, जुन बिग्रेकाले पछि फेरि बनाइएको थियो। लङ्काबाट प्राप्त भएको भगवान् बुद्धको ३/३ वर्षमा जात्रा गरिने पवित्र अस्थिधातु यही चैत्यको फेद जमीनमुनि राखिएको छ। यस विहारमा केही भिक्षुहरू बस्दछन्। यहाँ पर्वपर्वमा धर्मदेशना, उपोषथव्रत, बौद्ध समारोहहरू गरिन्छन्।

स्वयम्भू चैत्य र स्थल महायानी बौद्ध धर्मको प्रतीक हो भने आनन्दकुटी विहार थेरवादी बौद्ध धर्मको प्रतीकको रूपमा रहेको छ। हुन त यहाँ पनि महायानी नेपाली शैलीको चैत्यमा नै भगवान् मूर्ति विराजमान गराइएको छ। त्यसैले यहां पनि नेपाली बौद्ध परम्परा बिलकुलै नभएको होइन।

यहाँ आनन्दकुटी विहारको सञ्चालन र सुरक्षण वि.सं. २००३ सालमा बनेको दायक सभा र २००४ सालमा बनेको आनन्दकुटी गुठीको अन्तर्गत हुन्छ।

बौद्ध धर्मसम्बन्धी नेपाली, नेपालभाषा र अंग्रेजीमा लेखहरू भएको 'आनन्दभूमि' नामक दुई वर्षदेखि चलिआएको मासिक बौद्ध पत्रिका यही आनन्दकुटीबाट प्रकाशित हुन्छ।



## आनन्दकुटी विद्यापीठ

आज स्वयम्भू डाँडाको पश्चिमी पाखामा जुन आनन्दकुटी आवासीय माध्यमिक विद्यापीठ अवस्थित छ त्यसको शुरूवात आनन्दकुटी विहारमा न्हुछेबहादर वज्राचार्य (हाल स्वर्गीय)ले सं २००८ सालमा गरेका थिए। पछि सं. २०१०-११ सालतिर यो स्कूल वर्तमान पाखामा अवस्थित सरकारी भवनहरूमा सारिएको थियो तथा नयाँनयाँ भवनहरू थपिँदै आए। यस स्कूलको निमित्त भिक्षु अमृतानन्दले समयसमयमा देश-विदेशबाट प्रशस्त चन्दा सङ्कलन गरिदिएका थिए। यस स्कुलको भौतिक विकासको निमित्त यथेष्ठ योगदान गर्ने महानुभावहरू मध्ये तीर्थनारायण मानन्धर, भक्तिलाल श्रेष्ठ, पूर्णमान उपासक, द्वारिकादास श्रेष्ठका नाम उल्लेखनीय छन्। सं. २०१४ सालमा पहिलो पल्ट एस.एल.सी. परिषमा सरिक भएका यस स्कूलका विद्यार्थीहरू सबै पास भएका थिए। यस बेला यस स्कूलबाट एस.एल.सी. उत्तीर्ण गरेका विद्यार्थी भद्रमान तुलाधर आजकाल काठमाडौं विश्वविद्यालयका रजिष्ट्रार भइरहेका छन्। त्यस्तै यहाँकै प्रधान अध्यापक भुवनलाल प्रधान सं. २०१७ साल पौषमा मन्त्रिपरिषदमा सम्मिलित गरिए। फेरि सं.२०२७ सालको एस.एल.सी परीक्षामा यहाँकै विद्यार्थी तीनजना क्रमशः पहिला, दोस्रो, तेस्रो भएका थिए-यस्ता घटनाहरू यस स्कूलको इतिहासमा विशेष रूपले स्मरणीय रहने छन्।



सं. २०२८ सालतिर नयाँ शिक्षा योजना लागू नभएसम्म बौद्ध विहारमा प्रारम्भ गरिएको र बौद्ध भावनाले सञ्चालित यो स्कुल एउटा मात्र बौद्ध विद्यालयको रूपमा निक्कै कहलिएका र लोकप्रिय पनि थियो ।

अन्त्यमा शान्ति निकुञ्ज विद्यालयको प्रधानअध्यापक छँदा गिरफ्तार भई जेलमा नजरबन्द भएको र आनन्दकुटी विद्यापीठको प्रधान अध्यापक छँदा मन्त्री गरिएको दुइटा घटना मेरो जीवनमा अविस्मरणीय रहने छन् ।



# मैत्री गुम्बा

मोटरको बाटो आउँदा बिसौनी पुग्नै लागेपछि बाटाको मुनिनिर दक्षिणमा देखिने तिब्बती ढाँचाको विहार मैत्री गुम्बा कहिन्छ । यो लगभग ५५ वर्ष अगाडि बनेको थियो । यहाँ पनि लामा भिक्षुहरू बस्दछन् ।

ल्हासामा निश्चिन्त रूपले धर्मकार्यमा लागिरहने सुविधा पहिलेजस्तो नरहेपछि केही भिक्षुहरू वि.सं.२००९ सालतिर काठमाडौं आएर किण्डोल विहारमा यताउति बस्न थाले । यिनीहरूले स्वयम्भूका अधिकारी र किण्डोलका द्वारेहरूको अनुमति लिएर एवं दस्तूर तिरेर वि.सं. २०११ सालमा यस गुम्बाको जग हाले। यसको निर्माण गर्न धेरै महानुभावहरूसँग चन्दा लिइएको थियो । यसमा राखिएको मैत्रेय बोधिसत्वको र अरू मूर्तिहरू पनि विभिन्न दाताहरूबाट प्रदान गरिएका हुन् । यसको स्थापना भिक्षु महाचन्द्र र बोधिरत्नको परिश्रम र देन विशेष रूपले स्मरणीय छ । महाचन्द्र भिक्षुले २०१६ सालतिर फेरि ल्हासा गएर आफ्ना गुम्बाहरूबाट ल्याउनुभएका किताबहरू अहिले यस मैत्री गुम्बामा सुरक्षित साथ राखिएका छन् ।

यस मैत्री गुम्बामा ललितपुरका सुब्बा विहारीलाल प्रव्रजित भएपछि केही वर्ष बसेका थिए । स्वयम्भू शिखरस्थित विश्वशान्ति (हाल कर्मराज भनिएको) महाविहारबाट वि.सं. २०१८-१९ सालतिर निकालिएका (अर्थात् लामा भिक्षुहरू) आजसम्म पनि यही गुम्बामा बसेर आफ्नो धर्मकार्यमा लागिरहेका छन् ।



# ध्यानकुटी

आनन्दकुटी विहारकै माथि एउटा अर्को विहार पनि बनाइएको छ जहाँ लामा भिक्षुहरू बस्ने गर्दछन् । यो ध्यानकुटी विहार भनिन्छ र यसको निर्माण ६०/६२ वर्ष अगाडि भएको थियो । यसको निर्माता स्वर्गीय योगरत्न गुरूजु थिए । कैयौंवर्ष उनी पनि यही कुटीमा वसेका थिए ।

पछि बनाइएको एउटा सानो चैत्य पनि यहाँ छ ।





**पुरस्कार र सम्मानबाट विभूषित**

१. धर्मोदय धम्म पुरस्कार, २०५६
२. धर्मबहादुर कल्याण कोष पुरस्कार, २०५६
३. केदारनाथ प्रधान स्मृति तथा प्रकाशन स्मृति सम्मान पत्र, २०५८
४. राष्ट्रिय प्रतिभा पुरस्कार, २०६२
५. इमेज सिरपा, ने.सं. ११२६
६. शंखधर सम्मान व सिरपा, नेवाः महागुथि- ने.सं. ११२८

# सङ्क्षेपमा भुवनलाल प्रधान

भुवनलाल प्रधान नेपालको बौद्धिक जगत्‌मा अत्यन्तै आदरपूर्वक लिइने नाम हो । जहानियाँ राणा शासनको अन्त्यका लागि नेपाली जनजीवनलाई शिक्षाका माध्यमबाट चेतनशील तुल्याउन उहाँले काठमाडौँमा शान्ति निकुञ्ज मा.वि., आनन्दकुटी मा.वि. लगायत थुप्रै शैक्षिक संस्था स्थापनाका साथै सञ्चालन गर्ने कार्यमा नेतृत्व प्रदान गर्नुभयो । सोही कारण उहाँले बन्दी जीवन पनि बिताउनु पऱ्यो ।

काठमाडौँ महानगरलाई विकासको पथमा लम्काउने क्रममा अग्रणी भई उहाँले यहाँ निर्वाचित जनप्रतिनिधिका रूपमा समेत सेवा प्रदान गर्नुभएको छ । साथै नेपाल सरकारको केन्द्रीय मन्त्रीका रूपमा पनि उहाँलाई पुरानो पुस्ताले चिन्ने गर्दछन् ।

नेपाली इतिहास र संस्कृतिलाई विदेशी आँखाबाट मात्रै हेर्न पाइने अवस्थालाई चिर्दै उहाँले नेपालीपनको इतिहास लेखन शुरू गर्नुभयो । जतिबेला कुनै पुस्तक प्रकाशन गर्न राणाशाहीद्वारा निर्देशित नेपालभाषा प्रकाशिनीको स्वीकृति प्राप्त गर्नु पर्दथ्यो, २००३ सालमा उहाँको नेपालभाषामा 'बाल-ज्ञान सफू' प्रकाशित भएको थियो । जुन शहीद शुक्रराज शास्त्रीद्वारा लिखित 'नेपालभाषा रीडर' पछिको दोस्रो स्वीकृत पुस्तक प्रकाशन भयो । त्यसअघि उहाँले २००१-२ सालमै भारतीय भूमिबाट प्रकाशन हुने 'धर्मदूत'मा फुटकर रचनाहरू प्रकाशन गरिसक्नु भएको थियो । ६५ वर्षअघि शुरू भएको उहाँको लेखनीले नेपालमा बुद्धधर्मको इतिहास र संस्कृति, राष्ट्रिय विभूति शंखधर साख्वाः र नेपाल सम्बत्, सात सालको जनक्रान्तिमा शहीदहरूको बलिदान साथै मित्रराष्ट्रहरू जापान र भूटानको इतिहासलाई समेत स्पष्ट रूपमा पाठक सामु प्रस्तुत गरेको छ । प्रस्तुत पुस्तक समेत उहाँ ३२ वटा कृतिका धनी हुनुभएको छ ।

उहाँका अनन्य मित्र दिवंगत तीर्थनारायण मानन्धर भन्नुहुन्थ्यो- स्वयम्भू वनमा वृक्षारोपण गरी त्यहाँको प्राकृतिक स्वरूप संरक्षण गर्ने कार्यमा भुवनललालले मन्त्री रहँदा ठूलो योगदान गर्नुभएको थियो । साथै स्वयम्भू टाकुरामा खानेपानीको आपूर्ति नियमित गर्न पनि उहाँको देन रहेको छ ।




प्रस्तुत पुस्तकमा उहाँ अद्वितीय विश्व बौद्ध सम्पदा स्वयम्भूकाबारे ऐतिहासिक, धार्मिक र सांस्कृतिक रूपमा मात्रै होइन वैज्ञानिक र दार्शनिक दृष्टिमा समेत प्रस्तुत हुनुभएको छ । "स्वयम्भू" स्वयम् उत्पत्ति भएको भन्ने किम्वदन्तीलाई खण्डन गर्दै यसमा उहाँले उत्पत्तिको वैज्ञानिक आधार समेत क्रमिक रूपमा तर्कपूर्ण ढंगबाट प्रस्तुत गर्नुभएको छ, जुन अत्यन्तै ज्ञानवर्द्धक छ । जसका लागि उहाँप्रति पाठक सदा ऋणी रहनेछन् ।

\- कुमार रञ्जित (पत्रकार)